

नाम : तुलसीशरण उपाध्याय
जन्मस्थान : शुक्लागण्डकी - ११ तनहुँ
जन्ममिति : २०१३ माघ कृष्णनवमी
पिता : खगेश्वरशरण उपाध्याय
माता : राधिका उपाध्याय
धर्मपत्नी : देवकी उपाध्याय
शिक्षा : शास्त्री (संस्कृत-साहित्य) वि.एड., एम.ए.(नेपाली)
पेशा : शिक्षक २०३८-२०५० शिव, त्रिभुवन र राधा मा.वि.
: संस्थापक प्र.अ.२०५०-२०७६ महर्षि वेदव्यास सं.मा.वि.(संस्कृतगुरुकुलम्) व्यास-३ दमौली
: प्राध्यापन २०४७-२०७२ आ.क.भा.भ.क्याम्पस तनहुँ
: संस्थापक प्राचार्य २०७४-२०७८ महर्षि वेदव्यास संस्कृत विद्यापीठ व्यास ३ व्यासपराशरक्षेत्र दमौली
संलग्नता : अध्यक्ष महर्षि वेदव्यास सं.मा.वि.(संस्कृतगुरुकुलम्)
: अध्यक्ष निम्बार्कसंस्कृतगुरुकुलम् गैंडाकोट-१ नवलपुर
: संस्थापक अध्यक्ष राधाकृष्णसंस्कृतगुरुकुलम् कास्की
: महासचिव निम्बार्क वैष्णव परिषद् नेपाल के.समिति
: सदस्य विश्व हिन्दु महासंघ नेपाल केन्द्रीय समिति
: सल्लाहकार वेदानुयायी प्रतिष्ठान नेपाल के.समिति
: आजीवन सदस्य निम्बार्क दर्शन केन्द्र , निम्बार्क वैष्णव परिषद् नेपाल, ने.रे.सो., नेपाल निम्बार्कपीठ केलादीघाट आदि एक दर्जनभन्दा बढी शैक्षिक, धार्मिक, सामाजिक संघ संस्थाहरूमा आबद्ध
कृति : वैदिक निम्बार्क वैष्णव सम्प्रदाय-२०७८
: श्रीहनुमत्स्तुतिसङ्ग्रह (तपाईंको हातमा)
: स्तुतिकाव्य (संस्कृत प्रकाशोन्मुख)
: श्रीराधाप्रार्थनाशतक (संस्कृत प्रकाशोन्मुख)
: भक्तिरहस्य प्रकाश खण्डकाव्य (अप्रकाशित)

ॐ श्रीहनुमते नमः

श्रीमद्गोस्वामी तुलसीदास विरचित

# श्रीहनुमत्स्तुतिसङ्ग्रह

(नेपाली-भावानुवाद-सहित)



तुलसीशरण उपाध्याय



नान्या स्पृहा रघुपते हृदयेऽस्मदीये सत्यं वदामि च भवानखिलान्तरात्मा ।
भक्तिं प्रयच्छ रघुपुङ्गव ! निर्भरां मे कामादिदोषरहितं कुरु मानसञ्च ॥



पराक्रमोत्साहमतिप्रताप - सौशील्यमाधुर्यनयानयैश्च ।
गाम्भीर्यचातुर्यसुवीर्यधैर्यैर्हनुमतः कोऽप्यधिकोऽस्ति लोके ॥

ॐ

श्रीहनुमते नमः

श्रीमद्गोस्वामी तुलसीदास विरचित

# श्रीहनुमत्स्तुतिसङ्ग्रह

## (नेपाली-भावानुवाद-सहित)

सङ्कलक एवं

भावानुवादक

**तुलसीशरण उपाध्याय**

**प्रकाशक**

श्रीकृष्ण सिग्देल

माधव सिग्देल

मधुसूदन सिग्देल

पुस्तकको नाम : श्रीहनुमत्स्तुतिसङ्ग्रह
सङ्कलक तथा भावानुवादक: तुलसीशरण उपाध्याय
प्रकाशक : श्रीकृष्ण सिग्देल
माधव सिग्देल
मधुसूदन सिग्देल

प्रथम संस्करण : २०७९ चैत्र शुक्लनवमी (श्रीरामनवमी)
प्रकाशन प्रति : ७०७
मूल्य : रु २००।- (व्यक्तिगत)
रु.२५०।- (संस्थागत)
मुद्रक : न्यू गौरव छापाखाना तथा स्टेसनरी सप्लायर्स
प्रेसमार्ग नारायणगढ चितवन फोन: ०५६-५९५३१२

## विभीषणकृत-हनुमत्स्तोत्रम्

नमो हनुमते तुभ्यं नमो मारुतसूनवे ।
नमः श्रीरामभक्ताय श्यामास्याय च ते नमः ॥
नमो वानर-वीराय सुग्रीव-सख्यकारिणे ।
लङ्का-विदाहनार्थाय हेलासागर-तारिणे ॥

सीताशोक-विनाशाय राममुद्रा-धराय च ।
रावणान्त-कुलच्छेदकारिणे ते नमो नमः ॥
बालैक-ब्रह्मचर्याय रुद्रमूर्ति-धराय च ।
विहङ्गमाय सर्वाय वज्रदेहाय ते नमः ॥

# शुभाशंसा

एक जागरूक अध्यवसायी विद्वान् श्रीतुलसीशरण उपाध्यायजीले श्रीतुलसीदासजीकृत रामचरित्रमानस आदिमा प्रस्तुत श्रीहनुमत्स्तुतिका साथै श्रीहनुमानचालीसा, श्रीसंकटमोचन-हनुमानाष्टक आदि स्तोत्रलाई सरल नेपाली भाषामा भावानुवाद गरेर सर्वसाधारण नेपालीलाई पनि बोधगम्य हुने गरी प्रकाशित गर्न लाग्नुभएकाले नेपालमा त्यसको ठूलो अभावको पूर्ति हुनेछ ।

सद्यः फलदायी स्तुतिका रूपमा सुप्रसिद्ध श्रीहनुमान-चालीसा श्रीसंकटमोचन-हनुमानाष्टक, श्रीहनुमान-बाहुक आदि स्तुतिसङ्ग्रह जसरी भारतीय जनमानसमा कण्ठहार बनेको छ त्यसै गरी नेपाली भाषामा गरिएको यस भावानुवादले आकर्षण गरेर नेपालीहरूको पनि कण्ठहार बन्नेछ भन्ने लागेको छ। उहाँले यसमा नेपाली भाषामा भावानुवाद मात्र गर्नुभएको छैन अपितु श्रीरुद्रावतार श्रीहनुमानजीलाई वैदिक देवताका रूपमा समेत प्रस्तुत गर्नुभएको छ ।

श्रीहनुमानचालीसा, श्रीसंकटमोचन-हनुमानाष्टक आदि स्तोत्र सन्तकवि श्रीतुलसीदासजीका अनुभूत तथा प्रयुक्त स्तोत्रहरू हुन् । श्रीतुलसीदासजीका कृतिलाई श्रीतुलसीशरणजीले अँगाल्नु स्वयंमा महत्त्वपूर्ण योग हो । कस्तो सुखद संयुति हो ।

अन्तमा भगवान् श्रीरामका परमभक्त महावीर श्रीहनुमानजीको स्मरण गर्दै यस कृतिको आयाम असीम बनोस् भन्ने हार्दिक मङ्गलमय शुभकामना व्यक्त गर्दछु ।


आचार्य प्रा. हरिशरण उपाध्याय

पूर्व प्रधानाचार्य
'क' वर्गीय
श्रीनिम्बार्क संस्कृत महाविद्यालय
वृन्दावन मथुरा भारत

संरक्षक
श्रीनिम्बार्क दर्शन केन्द्र
(श्रीराधाकृष्ण मन्दिर) प्रतीक वृन्दावन
गैंडाकोट न.पा. १ नबलपुर

# शुभकामना

शिक्षा जगतमा क्रियाशील रहेर आफ्नो पूरा जीवन संस्कृत शिक्षाको प्रचार प्रसारका निमित्त अर्पण गर्नु हुने सरल स्वभावका धनी सम्माननीय श्री तुलसीशरण उपाध्याय सिग्देलजी सेवा निवृत्त भएपछि पनि वैदिक सनातन संस्कृति एवं परम्परको संरक्षण एवं संवर्धनका निमित्त आज पनि क्रियाशील हुनुहुन्छ । वर्तमान समयमा उहाँले संस्कृत हिन्दी नजानेका आस्तिक भक्तहरूको कल्याण गर्न **'हनुमत्स्तुतिसङ्ग्रहः'** नामक लघु पुस्तकको नेपालीमा भावानुवाद गरेर भक्तहरूको ठूलो उपकार गर्नु भएको छ ।

श्रीरामभक्त पवनपुत्र हनुमानजी एक यस्ता देवता हुनुहुन्छ जुन आज पनि श्रीरामकथा एवं कीर्तन भएका ठाउँमा गुप्त रूपमा आउनु हुन्छ र कथा कीर्तनमा गुप्त रूपमै सहभागी हुनुहुन्छ । उहाँ अष्टचिरञ्जीवीहरू **(अश्वत्थामा, बलि, व्यास, हनुमान, विभीषण, कृपाचार्य, परशुराम र मार्कण्डेय)** मध्ये एक हुनुहुन्छ । यो कराल कलिकालमा पनि हनुमानजीका अनेकौं भक्तहरू छन् जसले मात्र रुद्रावतार श्रीहनुमानजीको भक्ति गरेर यस लोकमा भुक्ति र परलोकमा मुक्ति प्राप्त गर्न सक्छन् ।

**'एक ही साधे सब सधे'** भनेझैं हनुमानजीको भक्ति गरेपछि श्रीसीताराम, शिवजी अनि श्रीहनुमानजी सबैको उपासना हुन्छ । साधकमा भक्तिको उदय हुन्छ । किनकि श्रीरामको लीला सम्पन्न गर्न स्वयं शिवजी नै हनुमानजीका रूपमा अवतीर्ण हुनुभएको हो । **'हरते मे हनुमान' , 'जासु हृदय आगार वसीहं राम शर चापधर'** र **'और देवता चित्तन धरहिं हनुमत से हि सर्व सुख करहिं'** यसका ज्वलन्त उदाहरण हुन् ।

आदरणीय श्रीतुलसीशरणजीले श्रीहनुमन्त लालजीका विषयमा गोस्वामी तुलसीदासद्वारा रचित हनुमानचालीसा लगायत केही स्तुतिहरूको सङ्कलन तथा तिनको नेपाली भाषामा भावानुवाद गरेर प्रशंसनीय कार्य गर्नु भएको छ । उहाँले भविष्यमा पनि यस्तै अनुवाद तथा अन्य रचना गरेर धेरै भगवद्भक्त जिज्ञासु पाठकहरूको कल्याण गर्नु हुनेछ भन्ने विश्वास लिएको छु । अन्तमा सम्माननीय उपाध्यायजीको दीर्घायु एवं सुस्वास्थ्यको मङ्गलकामना गर्दै हार्दिक शुभकामना व्यक्त गर्दछु ।

**प्रा. रामचन्द्र शर्मोपाध्याय लम्साल**
पूर्व विभागाध्यक्ष
श्रीसनातन धर्म संस्कृत कलेज
आजमगढ़ उत्तर प्रदेश

# प्रकाशकीय

वेद, पुराण, रामायण, महाभारत, हनुमदुपासना, मन्त्रमहोदधि आदि ग्रन्थमा शिवावतार हनुमानजीको सुन्दर वर्णन, प्रशंसा र उपासनाविधिको विशेष चर्चा पाइन्छ। तुलसीदासजीले हनुमानचालीसा, हनुमानबाहुक आदि दर्जनौं फुटकर रचनाहरूमा हनुमानजीको सुन्दर चर्चा र स्तुति गर्नुभएको छ । स्तुतिले ईश्वरको महिमा र अनन्ततालाई चित्तको गहिराइमा पुऱ्याइदिन्छ । ईश्वरको महत्ताको बोध अनि हाम्रो लघुताको मिलन समर्पण हो । आर्ती भक्तमा समर्पणभाव जगाउने सशक्त माध्यम स्तुति हो ।

यही समर्पणभाव सन्तकवि तुलसीदासजीद्वारा रचित हनुमत्स्तुति, हनुमानचालीसा, हनुमानबाहुक आदि स्तुतिपरक कृतिमा पाउँछौं । महर्षि-वेदव्यास-संस्कृत-गुरुकुलम् तथा विद्यापीठका संस्थापक प्राचार्य हामी सबैका पथप्रदर्शक वन्दनीय पूज्यपिता श्रीतुलसीशरण उपाध्यायज्यूले सन्तकवि तुलसीदासजीका उल्लिखित स्तुतिपरक रचनाहरूको सङ्कलन र तिनको नेपाली भाषामा भावानुवाद गरी संस्कृत, हिन्दी, अबधी भाषा नजान्ने हनुमान्जीका भक्त जिज्ञासु पाठकहरूलाई ठूलो गुन लगाउनु भएको छ ।

यस भावानुवादमा परमभागवत श्रीरामभक्त हनुमानजीप्रतिको अविचल श्रद्धा, विश्वास, समर्पणभाव तथा स्वाभ्यन्तर अन्तरपीडा स्वस्फूर्तरूपमा अभिव्यक्त भएको छ । साथै यसमा अनिष्टनिवारण, स्वास्थ्यलाभ, भगवत्भक्ति र आत्मशुद्धिको तीव्र आकाङ्क्षा र शरणागतको आर्तपुकार पनि छ । यसले मनको मलिनतालाई हटाउन र अभ्यन्तरमा विनम्रतापूर्वक ध्येयतत्त्वप्रतिको निष्ठा र समर्पणभावलाई पनि निरन्तरता दिन खोजेको अनुभूति हुन्छ ।

यस स्तुतिसङ्ग्रहको प्रकाशनका क्रममा रहेका त्रुटिहरू औंल्याई सहयोग गरिदिनुहुन विज्ञ पाठक वर्गमा सादर अनुरोध गर्दै प्रकाशन कार्यमा सहयोग गर्नुहुने सम्पूर्ण महानुभावहरूप्रति हार्दिक आभार एवं धन्यवाद ज्ञापन गर्दछौं । अन्तमा **'वन्दे विशुद्धविज्ञानौ कवीश्वरकपीश्वरौ'** श्लोकद्वारा सविनय वन्दना गर्दै भावानुवादक प्रातः स्मरणीय परमपूज्य पिताश्रीको साहित्यिक लेखन तथा अनुवाद यात्राको सफलताको मङ्गलमय शुभकामनासहित उहाँको सुस्वास्थ्य एवं दीर्घायुको लागि भगवान् श्रीहरिसँग सभक्ति प्रार्थना गर्दछौं ।

***

# अनुवादकीय निवेदन

सनातन वैदिक परम्परामा महामनीषी सन्तहरू अत्युच्च कोटिका ज्ञानी, भक्त र परोपकारी हुनुहुन्थ्यो । उहाँहरूले लोककल्याण हेतु भगवदीय ज्ञानको मुक्त हृदयले प्रचार गर्नुहुन्थ्यो । जगदात्मा भगवान् एउटै भएपनि विष्णु, गणेश, सूर्य, शक्ति, शिव, राम, कृष्ण, वामन आदि अवतारका नाममा पुराण, उपासना आदि ग्रन्थको रचना गरी उहाँहरूले भिन्नभिन्न रुचिका प्राणीहरूलाई एउटै परमात्मा प्राप्तितर्फ अभिप्रेरित गर्नुभएको थियो । यसको श्रृङ्खला अद्यावधि बाल्मीकि, पराशर, व्यास, प्रभृति कविमनीषीहरूद्वारा अविछिन्न रूपमा चलिरहेको छ ।

यही परम्पराका महामनीषी सन्तकवि गोस्वामी तुलसीदासजीले संस्कृत, अबधी, हिन्दी आदि भाषामा भगवान् श्रीराम, श्रीकृष्ण र भक्तशिरोमणि हनुमानजीका चरित्रमा आधारित सानाठूला गरी करीब चौबीसवटा भक्तिपरक रचना गर्नु भएको छ । ती रचनामध्ये यस सङ्ग्रहमा हनुमानजीको उदात्त चरित्रमा आधारित हनुमत्स्तवन, हनुमानचालीसा, सङ्कटमोचन-हनुमानाष्टक, वजरंगवाण, हनुमानबाहुक, हनुमानसाठिका र हनुमत्परक भावनिर्देशक केही वेदमन्त्रको सङ्कलन र तिनको भावानुवाद प्रस्तुत गरिएको छ । मूलतः हनुमानजीको सुस्मरणमा आफुलाई अभ्यस्त गराउन तिनको यथासम्भव नेपाली भाषामा भावानुवाद गर्ने धृष्टता गरेको व्यहोरा निवेदन गर्दछु ।

श्रीरामभक्त हनुमानजी रुद्रस्वरूप वैष्णव/भागवत हुनुहुन्छ । उहाँ भक्त र भगवान् सबैका स्नेहपात्र, श्रद्धास्पद, लोकप्रिय एवं दिव्यशक्तिले परिपूर्ण हुनुहुन्छ अनि समस्त अभीष्ट फल प्रदान गर्नेवाला परमदेवता पनि हुनुहुन्छ । भनिएको छ - **'हनुमान् देवता प्रोक्तः सर्वाभीष्ट फलप्रदः ।'** यही विश्वास अनि विद्वान् सन्तका लेखनी र मुखारविन्दबाट निःसृत दिव्य वाणीहरू मध्येबाट यत्किञ्चित् गृहित मष्तिकस्थ अल्पज्ञानका भरमा असक्षम हुँदाहुँदै पनि हनुमत्स्मरण किंवा

चिन्तनलाई निरन्तरता दिन, कलिदोषादिबाट हुने दुःख कष्टनिवारण गर्न, हनुमत्कृपा प्राप्त गरी जीवनमा विद्या, ज्ञान, समृद्धि ल्याउन र हनुमत्विषयक जिज्ञासा मेटाउन केही सहयोग पुग्ला भन्ने भावनाले यो लघुप्रयासार्थ बढी उत्प्रेरित भएको हुँ ।

परमसिद्ध सन्तकवि तुलसीदासजीद्वारा हनुमानजीको अनुपम शक्ति, अनन्य भक्ति, रहस्यमय पुरुषार्थ र गुणगरिमाका विषयमा विशेष चिन्तन गरिएका रचनाहरूको भावानुवाद गर्दा शब्द, अर्थ र भावको गहिराइमा आफू पुग्न नसकेको अनुभूति बारबार भएको छ । तसर्थ यो भावानुवाद अपूर्ण मात्र होइन त्रुटिपूर्ण पनि छ कि भन्ने मलाई लागेको छ । तथापि यो जुन रूपमा तयार भएको छ म यसलाई **'त्वदीयं वस्तु**..' सम्झी भक्तभागवतमा समर्पण गर्दै सहृदयी पाठकबीच पुऱ्याउने जमर्को गरेको छु ।

यसमा जो जहाँबाट जे जस्ता स्तुति, मन्त्र आदि सामग्री ग्रहण गरेको छु , ती सबै सद्ग्रन्थ र महामनीषीहरूप्रति हृदयतः नमन गर्दै कृतज्ञता अर्पण गर्दछु । आशा छ भक्तमहाकल्पतरु महावीर श्रीहनुमानजीका उपासक, अध्येता र सहृदयी पाठक वर्गले यसको अध्ययन गरी यथोचित रचनात्मक सुझाब दिई किंवा मार्गदर्शन गराई सहयोग पुऱ्याउनु हुनेछ भन्ने विश्वास लिएको छु ।

अन्तमा यसको सङ्कलन तथा भावानुवाद प्रकाशनका सन्दर्भमा शुभाशीर्वाद सहित आफ्नो अमूल्य सुझाब दिई उत्प्रेरणा जगाई उत्साह बढाइदिनु हुने विद्वद्वरेण्य आचार्य प्रा.श्रीहरिशरण उपाध्यायज्यू, प्रा. श्रीरामचन्द्र शर्मा उपाध्यायज्यू, श्रीकृष्णशरण उपाध्यायज्यू, श्रीदेवशरण उपाध्यायज्यू लगायत समस्त विद्वज्जनप्रति कृतज्ञता व्यक्त गर्दछु । साथै प्रकाशनको भूमिका निर्वहन गर्ने मेरा प्रिय पुत्रहरू श्रीकृष्ण, माधव र मधुसूदन सिग्देलप्रति स्नेहपूर्ण शुभाशीर्वाद व्यक्त गर्दै न्यू गौरव छापाखाना-समेतलाई धन्यवाद दिन चाहन्छु ।

**जय श्रीराम ! जय श्रीहनुमान् !**

# विषयसूची



**श्रीहनुमत्स्मरणम्**

**प्रातः स्मरामि हनुमन्तमनन्तवीर्यं**
**श्रीरामचन्द्रचरणाम्बुजचञ्चरीकम् ।**
**लङ्कापुरी - दहननन्दित - देववृन्दं**
**वन्दारुकल्पतरुमव्ययमाञ्जनेयम् ॥**
**सायं भजामि शरणोपसृताखिलार्ति-**
**पुञ्जप्रणाशनविधौ प्रथितप्रतापम् ।**
**अक्षान्तकं सकलराक्षसवंशधूम-**
**केतुं प्रमोदितविदेहसुतं दयालुम् ॥**
*******

श्रीमद्गोस्वामी तुलसीदासकृत

# श्रीहनुमत्स्तुति

## (नेपाली भावार्थसहित)

**अतुलितबलधामं हेमशैलाभदेहं**
**दनुजवनकृशानुं ज्ञानिनामग्रगण्यम् ।**
**सकलगुणनिधानं वानराणामधीशं**
**रघुपतिप्रियभक्तं वातजातं नमामि ॥**

**भावार्थः** अतुलनीय शक्तिका निवास, स्वर्णपर्वतसमान कान्ति युक्त देहवाला, दानवरूपी वनका अग्नि, ज्ञानीहरूमा अग्रणी, समस्त गुणहरूका भण्डार, वानरहरूका स्वामी, श्रीरघुनाथजीका प्रियभक्त पवनपुत्र श्रीहनुमानजीलाई म नमस्कार गर्दछु ।

**गोष्पदीकृतवारिशं मशकीकृतराक्षसम् ।**
**रामायणमहामालारत्नं वन्देऽनिलात्मम् ॥२॥**

**भावार्थः** विशाल समुद्रलाई पनि गाईको खुरसमान अति सङ्क्षिप्त गराउनेवाला, राक्षसहरूलाई मच्छडसरह मसल्ने किंवा नाश गर्नेवाला, रामायणरूपी महामालाको सुन्दररत्न, अनिलात्मज वायुनन्दन महावीर हनुमानजीलाई म वन्दना/प्रणाम गर्दछु ।

**अञ्जनानन्दनं वीरं जानकीशोकनाशनम् ।**
**कपीशमक्षहन्तारं वन्दे लङ्काभयङ्करम् ॥३॥**

**भावार्थः** माता अञ्जनीलाई आनन्द/प्रसन्नता दिने वाला, माता सीताजीको शोकलाई नष्ट गर्नेवाला, रावणपुत्र अक्षकुमारको संहार गर्नेवाला, लङ्काका लागि भङ्यकर स्वरूपवाला, वानरहरूका स्वामी महावीर हनुमानजीलाई म वन्दना/प्रणाम गर्दछु ।

**उलङ्घ्यसिन्धोः सलिलं सलीलं**
**यः शोकवह्नीं जनकात्मजायाः ।**
**आदाय तैनेव ददाह लङ्कां**
**नमामि तं प्राञ्जलिराञ्जनेयम् ॥४॥**

**भावार्थः** जसले विशाल समुद्रको जललाई लीलापूर्वक किंवा खेल-खेलमै नाघ्नुभयो/पारगर्नुभयो । माता सीताजीको शोकरूपी अग्निलाई लिएर त्यही अग्निले नै लङ्कापुरी जलाइदिनु भयो । त्यस्ता अञ्जनीकुमार हनुमानजीलाई म हात जोडेर नमस्कार गर्दछु ।

**मनोजवं मारुततुल्य वेगं**
**जितेन्द्रियं बुद्धिमतां वरिष्ठम् ।**
**वातात्मजं वानरयुथमुख्यं**
**श्रीरामदूतं शरणं प्रपद्ये ॥५॥**

**भावार्थः** मनसमान तीव्र गतिवाला, वायुसमान शक्तिवाला, इन्द्रियहरूमाथि विजयप्राप्त गर्नेवाला, बुद्धिमानहरूमा वरिष्ठ किंवा अग्रणी, वानरहरूको समूहका प्रमुख, भगवान् श्रीरामचन्द्रजीका दूत वायुपुत्र हनुमानजीको शरणमा जान्छु/शरण प्राप्त गर्दछु ।

**आञ्जनेयमति - पाटलाननं**
**काञ्चनाद्रिकमनीय विग्रहम् ।**
**पारिजाततरू - मूलवासिनं**
**भावयामि पवमाननन्दनम् ॥६॥**

**भावार्थ**ः माता अञ्जनीका प्रियपुत्र, गुलाबको फूलसमान सुन्दर मुखवाला, हेमकुट पर्वतसमान कमनीय/मनोहर शरीरवाला, पारिजात/कल्पवृक्षको फेदमा निवास गर्नेवाला, पवननन्दन महावीर श्रीहनुमानजीलाई म भावना किंवा सम्झना गर्दछु ।

**यत्र यत्र रघुनाथ - कीर्तनं**
**तत्र तत्र कृतमस्तकाञ्जलिम् ।**
**वाष्पवारि - परिपूर्ण - लोचनं**
**मारुतिं नमत राक्षसान्तकम् ॥७॥**

**भावार्थः** जहाँ जहाँ श्रीरघुनाथजीको कथासङ्कीर्तन हुन्छ त्यहाँ त्यहाँ शरणागतमस्तक, अञ्जलियुक्त हस्तकमल एवं आनन्दाश्रुपूर्ण नेत्रसहित प्रपत्तिभावले उपस्थित रहनेवाला, राक्षसहरूको अन्त गर्नेवाला पवनपुत्र महावीर हनुमानजीलाई म नमस्कार गर्दछु ।

***

श्रीमद्गोस्वामी तुलसीदासकृत

# श्रीहनुमानचालीसा

## (नेपाली भावार्थसहित)

## दोहा

**श्रीगुरु चरन सरोज रज**
**निज मनु मुकुरु सुधारि ।**
**बरनउँ रघुबर बिमल जसु**
**जो दायकु फल चारि ॥**

**भावार्थः** श्रीगुरुदेव (श्रीगुरुमहाराजजी) का चरणकमलको धुलाले आफ्नो मनरूपी दर्पणलाई पवित्र बनाएर श्रीरघुवीर भगवान् श्रीरामचन्द्रको निर्मल यश किंवा कीर्तिको वर्णन गर्दछु जुन चारै पुरुषार्थ (धर्म, अर्थ, काम र मोक्ष) प्रदान गर्नेवाला छ ॥१॥

**बुद्धिहीन तनु जानिके**
**सुमिरौं पवन-कुमार ।**
**बल बुधि बिद्या देहु**
**मोहिं हरहु कलेस बिकार ॥**

**भावार्थः** हे पवनपुत्र हनुमानजी म तपाईंको स्मरण गर्दछु । तपाईं त जान्नु हुन्छ नै मेरो शरीर र बुद्धि दुबै दुर्बल छ । तपाईं मेरा निमित्त शारीरिक बल सद्बुद्धि एवम् ज्ञान प्रदान गर्नुहोस् । मेरा सबै दुःख र दोषहरूलाई दूर/नाश गरिदिनुहोस् ॥२॥

## चौपाई

**जय हनुमान ज्ञान गुन सागर ।**
**जय कपीस तिहुँ लोक उजागर ॥**
**राम-दूत अतुलित बलधामा ।**
**अंजनि-पुत्र पवनसुत नामा ॥**

**भावार्थः** हे सकलगुणनिधान हनुमानजी ! तपाईंको जय होस् । जय होस् । तपाईं ज्ञान र गुणका सागर हुनुहुन्छ । हे कपीश्वर ! तपाईंको जय होस् । जय होस् । तिनै लोक (स्वर्ग, पृथ्वी, पाताल) मा तपाईंको

सुकीर्ति फैलिएको छ। हे पवनसुत ! हे अञ्जनीनन्दन ! हे श्रीरामदूत ! हे हनुमानजी ! तपाईं बलवान्हरूमा सर्वश्रेष्ठ किंवा अतुलनीय हुनुहुन्छ। तपाईं समान बलशाली व्यक्तित्व संसारमा अर्को कुनै दोस्रो छैन ॥३-४॥

**महाबीर बिक्रम बजरंगी।**
**कुमति निवार सुमति के संगी ॥**
**कंचन बरन बिराज सुबेसा।**
**कानन कुंडल कुंचित केसा ॥**

**भावार्थः** हे महावीर हनुमानजी ! हे बजरंगबली ! तपाईं विशेष पराक्रमी हुनुहुन्छ। तपाईं भक्तहरूको कुबुद्धिलाई दूर गरेर उनीहरूमा सुबुद्धिको उदय गराउनु हुन्छ अनि तिनै भक्तहरूको सहायक बन्नुहुन्छ। हे अज्जनीनन्दन ! तपाईं सुवर्ण समान सुन्दर वर्णको हुनुहुन्छ। तपाईंले शरीरमा धारण गर्नु भएको सुन्दर वस्त्र, दुबै कानमा लगाउनु भएका कुण्डल र घुँगुरिएको केशले तपाईं सुशोभित हुनुहुन्छ ॥५-६॥

**हाथ बज्र औ ध्वजा बिराजै।**
**काँधे मूँज जनेऊ साजै ॥**
**संकर सुवन केसरी-नंदन।**
**तेज प्रताप महा जग वंदन ॥**

**भावार्थः** हे हनुमानजी ! तपाईंको हातमा बज्र र ध्वजा अनि काँधमा मूँजनिर्मित (कुशका जस्ता पात र काँसका जस्ता सेता फूल फुल्ने एक जातको झारलाई बाटेर बनाएको) यज्ञोपवीत शोभायमान छ। हे रुद्रावतार (भगवान् शंकरका अवतार) ! हे केसरीनन्दन हनुमानजी ! तपाईंको महान् शौर्य-तेज, प्रताप-यशको संसारभरि वन्दना किंवा स्तुति हुन्छ ॥७-८॥

**बिद्यावान गुनी अति चातुर।**
**राम काज करिबे को आतुर ॥**
**प्रभु चरित्र सुनिबे को रसिया।**
**राम लखन सीता मन बसिया ॥**

**भावार्थः** हे परमवन्दनीय हनुमानजी ! तपाईं विद्यावत्ता, गुणवत्ता र कार्यकुशलताले परिपूर्ण हुनुहुन्छ अनि भगवान् श्रीरामको

कार्य/सेवा गर्नका लागि सदैव तत्पर रहनु हुन्छ । हे श्रीरामभक्त महावीर हनुमानजी ! तपाईं भगवान् श्रीरामको चरित्र सुनिरहँदा अत्यन्त आनन्दित हुनुहुन्छ । भगवान् श्रीरामचन्द्र, जगज्जननी सीता र भ्राता लक्ष्मण तपाईंको हृदयमा सदैव निवास गर्नुहुन्छ ॥९-१०॥

**सूक्ष्म रूप धरि सियहिं दिखावा ।**
**बिकट रूप धरि लङ्क जरावा ॥**
**भीम रूप धरि असुर सँहारे ।**
**रामचन्द्र के काज सँवारे ॥**

**भावार्थः** हे केसरीनन्दन हनुमानजी ! तपाईंले आफ्नो अति सूक्ष्म (निकै सानो) स्वरूप धारण गरेर माता सीताजीलाई देखाउनु भयो अनि भयङ्कर डरलाग्दो रूप धारण गरेर लङ्कापुरीलाई जलाउनु भयो । हे श्रीरघुपतिप्रियभक्त हनुमानजी ! तपाईंले भीम (विकराल) स्वरूप धारण गरी असुर राक्षसहरूलाई विनाश गर्नुभयो र भगवान् श्रीरामचन्द्रका उद्देश्यहरूलाई सफल बनाउनु भयो ॥११-१२॥

**लाय सजीवन लखन जियाये ।**
**श्रीरघुबीर हरषि उर लाये ।**
**रघुपति कीन्हीं बहुत बडाई ।**
**तुम मम प्रिय भरतहि सम भाई ॥**

**भावार्थः** हे महावीर हनुमानजी ! तपाईंले सञ्जीवनी बुटी ल्याएर लक्ष्मणजीलाई पुनर्जीवित गराउनु भयो । यस कार्यबाट श्रीरघुवीर हर्षित भएर तपाईंलाई हृदयले लगाउनु भयो । छाती जोडेर तपाईंसँग अङ्कमाल गर्नुभयो । हे हनुमानजी ! भगवान् श्रीरामचन्द्रजीले प्रसन्न भएर तपाईंको धेरैधेरै प्रशंसा गर्नुभयो र भन्नुभयो कि हे हनुमान ! तिमी मलाई भाइ भरतकै समान प्रिय छौ ॥१३-१४॥

**सहस बदन तुम्हरो जस गावैं ।**
**अस कहि श्रीपति कंठ लगावैं ॥**
**सनकादिक ब्रह्मादि मुनीसा ।**
**नारद सारद सहित अहीसा ॥**

**भावार्थः** हे हनुमानजी ! प्रभु श्रीरामचन्द्रले यति भनेर तपाईंलाई आफ्नो गलामा लगाउनु भयो र फेरि उहाँले भन्नुभयो कि हे हनुमान ! तिम्रो यश-कीर्ति सहस्र (हजार) मुखबाट सराहनीय किंवा प्रशंसनीय छ। हे हनुमानजी ! तपाईंको यशको पूर्णतः वर्णन गर्न श्रीसनक, श्रीसनातन, श्रीसनन्दन, श्रीसनत्कुमार आदि मुनि, ब्रह्मा आदि देवता, नारद आदि ऋषि, सरस्वती, शेषनागजी कसैले पनि सक्दैनन् ॥१५-१६॥

**जम कुबेर दिगपाल जहाँ ते।**
**कबि कोबिद कहि सके कहाँ ते ॥**
**तुम उपकार सुग्रीवहिं कीन्हा।**
**राम मिलाय राज पद दीन्हा ॥**

**भावार्थः** हे हनुमानजी ! तपाईंको यश किंवा कीर्तिको पूर्णतः वर्णन गर्न त यमराज, कुबेर आदि दशदिक्पाल (सबै दिशाहरूका रक्षक), कवि, विद्वान्, पण्डित कसैले पनि सक्दैनन् । हे हनुमानजी ! तपाईंले राज्यबाट निर्वासित सुग्रीवजीलाई प्रभु श्रीरामसँग मिलाएर उहाँको ठूलो उपकार गर्नुभयो । फलस्वरूप सुग्रीवलाई पुनः राजपद प्राप्त भयो र उहाँ वानरहरूको राजा बन्नुभयो ॥१७-१८॥

**तुम्हरो मन्त्र बिभीषन माना।**
**लंकेस्वर भए सब जग जाना ॥**
**जुग सहस्र जोजन पर भानू।**
**लील्यो ताहि मधुर फल जानू ॥**

**भावार्थः** हे महावीर हनुमानजी ! तपाईंको उपदेश किंवा मन्त्रको विभीषणले पालना गर्नुभयो । यही कारणले विभीषण लङ्काका राजा बन्नुभयो। यस घटनालाई सबै संसारले जानेको छ। हे शक्तिमान् हनुमानजी ! तपाईंले जुन ठाउँमा पुग्नका लागि हजारौं योजन लाग्दछ त्यति टाढा अर्थात् हजार युग योजन दूर/टाढा विद्यमान सूर्यलाई पनि एउटा मिठो फल सम्झेर निल्नुभयो ॥१९-२०॥

**प्रभु मुद्रिका मेलि मुख माहीं।**
**जलधि लाँघि गये अचरज नाहीं ॥**

**दुर्गम काज जगत के जेते ।**
**सुगम अनुग्रह तुम्हरे तेते ॥**

**भावार्थः** हे अन्जनीनन्दन हनुमानजी ! तपाईंले प्रभु श्रीरामचन्द्रजीले दिनुभएको औंठी मुखमा राखेर समुद्र पार गर्नुभयो । यसमा कुनै आश्चर्य मान्नु पर्ने अवस्था छैन । हे पवनसुत हनुमान्जी ! यस जगत्/संसारमा जति पनि दुर्गम (कठिनभन्दा कठिन कामहरू) छन् ती सबै कामहरू तपाईंको कृपा किंवा अनुग्रहले सुगम (सहज) रूपमा सम्पन्न हुन्छन् ॥२१-२२॥

**राम दुआरे तुम रखवारे ।**
**होत न आज्ञा बिनु पैसारे ॥**
**सब सुख लहै तुम्हारी सरना ।**
**तुम रच्छक काहू को डरना ॥**

**भावार्थः** हे पवनसुत ! तपाईं श्रीरामको द्वाररक्षक प्रहरी हुनुहुन्छ । जहाँ तपाईंको आज्ञाविना कसैलाई पनि प्रवेश मिल्दैन । भगवान् श्रीरामकृपाप्राप्तिका लागि तपाईंको प्रसन्नता (अर्चन-पूजन) अनिवार्य हुन्छ । हे शरणागतवत्सल हनुमानजी ! तपाईंको शरणमा आउनेवाला प्राणी सबै प्रकारको सुख र सम्पत्तिको अधिकारी हुन्छ । तपाईं जसको रक्षक हुनुहुन्छ उसमा कसैको डर रहँदैन ॥२३-२४॥

**आपन तेज सम्हारो आपै ।**
**तीनों लोक हाँक तें काँपै ॥**
**भूत पिसाच निकट नहिं आवै ।**
**महाबीर जब नाम सुनावै ॥**

**भावार्थः** हे हनुमानजी ! तपाईंको तेजस्वितालाई तपाईं बाहेक अरु कसैले पनि सम्हाल्न सक्दैनन् । तपाईंको हाँक, गर्जना किंवा अट्टाहासबाट तीनै लोक कम्पित हुन्छ । हे महावीर हनुमानजी ! जहाँ तपाईंको नाम सङ्कीर्तन सुनाइन्छ वा हुन्छ त्यहाँ भूत-पिशाच आदि देवयोनी विशेष नजिक किंवा वरिपरि आउन या परिभ्रमण गर्न सक्दैनन् ॥२५-२६॥

**नासै रोग हरै सब पीरा।**
**जपत निरंतर हनुमत बीरा॥**
**संकट ते हनुमान छुडावै।**
**मन क्रम बचन ध्यान जो लावै॥**

**भावार्थः** हे महावीर हनुमानजी ! तपाईंको नामको नित्य निरन्तर जप गर्नाले सबै प्रकारका रोगहरू (शारीरिक र मानसिक व्याधिहरू) नाश हुन्छन् । सम्पूर्ण पीडा/पीरहरू पनि मेटिन्छन् । हे संकटमोचन हनुमानजी ! मनले सोच्दा, मुखले बोल्दा र हातले कर्म गर्दा जसको ध्यान तपाईंमा रहन्छ। उनीहरूलाई तपाईं सबै प्रकारका कष्टहरूबाट मुक्त गरिदिनुहुन्छ ॥२७-२८॥

**सब पर राम तपस्वी राजा।**
**तिन के काज सकल तुम साजा॥**
**और मनोरथ जो कोइ लावै।**
**सोइ अमित जीवन फल पावै॥**

**भावार्थः** हे हनुमानजी ! आदर्श एवं तपस्वी राजा प्रभु रामजी सबैभन्दा श्रेष्ठ/उत्तम हुनुहुन्छ । तपाईंले प्रभु रामचन्द्रजीका सम्पूर्ण कार्यहरूलाई सहजरूपमा नै पूरा गर्नुभयो । हे कृपानिधान हनुमानजी ! जसमाथि तपाईंको कृपादृष्टि हुन्छ उसले कुनै पनि मनोरथ किंवा अभिलाषा राख्यो भने उसलाई यस्तो फल मिल्दछ जसको जीवनमा कुनै सीमा हुँदैन । अर्थात् असीमित फल मिल्दछ ॥२९-३०॥

**चारों जुग परताप तुम्हारा।**
**है परसिद्ध जगत उजियारा॥**
**साधु संत के तुम रखवारे।**
**असुर निकंदन राम दुलारे॥**

**भावार्थः** हे कीर्तिवान् हनुमानजी ! चारै युग (सत्य, त्रेता, द्वापर र कलि) मा तपाईंको प्रताप/यशको गायन भएको छ। जगतमा तपाईंको प्रसिद्धि/ख्याति सर्वत्र प्रकाशमान छ । हे श्रीरामका अतिप्रिय भक्त हनुमानजी ! तपाईंले साधु, सन्त किंवा सज्जनहरूको रक्षा/पालन गर्नुहुन्छ भने दुष्ट दैत्य, दानव, असुर, राक्षस आदि दुर्जनहरूको विनाश/संहार गर्नुहुन्छ। ॥३१-३२॥

**अष्ट सिद्धि नौ निधि के दाता ।**
**अस बर दीन जानकी माता ॥**
**राम रसायन तुम्हरे पासा ।**
**सदा रहो रघुपति के दासा ॥**

**भावार्थः** हे हनुमानजी ! तपाईंलाई माता जानकीबाट यस्तो वरदान प्राप्त भएको छ जसबाट तपाईं अष्टसिद्धि (अणिमा, महिमा, गरिमा, लघिमा, प्राप्ति, प्राकाम्य, ईशित्व र वशित्व) तथा नवनिधि (पद्म, महापद्म, शंख, मकर, कच्छप, मुकुन्द, कुन्द, नील र बर्च) दिन सक्नुहुन्छ । हे हनुमानजी ! तपाईं सदैव रघुपति प्रभु श्रीरामको शरणमा रहनु हुन्छ । त्यसैले तपाईंका पास वृद्धत्व र असाध्य रोगनिवारण गर्नका लागि रामरसायन (राम-नामरूपी औषधि) विद्यमान छ ॥३३-३४॥

**तुम्हरे भजन राम को पावै ।**
**जनम जनम के दुख बिसरावै ॥**
**अंत काल रघुबर पुर जाई ।**
**जहाँ जन्म हरिभक्त कहाई ॥**

**भावार्थः** हे सकलगुणनिधान हनुमानजी ! तपाईंको भजन गर्नाले भगवान् श्रीरामको प्राप्ति सुनिश्चित हुन्छ । तपाईंका भक्तहरूको जन्म जन्मान्तरमा सञ्चित पाप/दुःखहरूको समूल विनाश हुन्छ । हे हनुमानजी ! तपाईंका भक्तहरू अन्तिम समयमा रघुनाथ प्रभु श्रीरामजीको दिव्यधाममा जान्छन् । यदि उनीहरूले जन्म लिएभने भगवान् श्रीरामको भक्ति गर्नेछन् र श्रीरामभक्त कहलाउनेछन् ॥३५-३६॥

**और देवता चित्त न धरई ।**
**हनुमत सेइ सर्ब सुख करई ॥**
**संकट कटै मिटै सब पीरा ।**
**जो सुमिरै हनुमत बलवीरा ॥**

**भावार्थः** हे सर्वसुखदाता हनुमानजी ! तपाईंको नित्य निश्छल सेवाबाट सबै प्रकारका सुखहरू मिल्दछन् । फेरि अन्य कुनै देवी देवताको उपासना/साधनाको आवश्यकता रहँदैन । हे महावीर ! जसले तपाईंको नित्य निरन्तर सुमिरन गरिरहन्छ उसका सम्पूर्ण सङ्कटहरू काटिन्छन् अनि सम्पूर्ण पीडाहरू मेटिन्छन् ॥३७-३८॥

**जै जै जै हनुमान गोसाईं।**
**कृपा करहु गुरुदेव की नाईं॥**
**जो सत बार पाठ कर कोई।**
**छूटहिं बंदि महा सुख होई॥**

**भावार्थः** हे गोस्वामी हनुमानजी ! तपाईंको जय होस् , जय होस् , जय होस् । हे सकलगुणनिधान/कृपानिधान श्रीगुरुदेव (श्रीगुरुमहाराजजी) का समान तपाईंले पनि ममाथि सदैव कृपा किंवा अनुग्रह गर्नुहोस् । हे श्रीगुरुदेव ! जसले यस हनुमान चालीसा स्तोत्रको सय आवृत्ति पाठ गर्दछ । ऊ सबै प्रकारका बन्धनहरूबाट मुक्त हुन्छ किंवा छुट्दछ । साथै उसलाई परमसुख/आनन्दको प्राप्ति हुन्छ ॥३९-४०॥

**जो यह पढै हनुमान चलीसा।**
**होय सिद्धि साखी गौरीसा॥**
**तुलसीदास सदा हरि चेरा।**
**कीजै नाथ हृदय महँ डेरा॥**

**भावार्थः** गौरीपति सदाशिवले भगवान् श्रीरामको पावन चरित्रवर्णित हनुमान चालीसा लेखाउनु भएको हो । त्यसैले उहाँ यसका साक्षी हुनुहुन्छ । जसले यो हनुमान चालीसा पढ्दछ उसलाई निश्चय नै सिद्धि प्राप्त हुन्छ । हे नाथ हनुमानजी ! यो तुलसीदास सदैव प्रभु श्रीरामको सेवक रहेको छ । तसर्थ तपाईं श्रीरामभक्त तुलसीदासका हृदयमा सदैव निवास गर्नुहोस् । ॥४१-४२॥

**दोहा**

**पवनतनय संकटहरन,**
**मंगल मूरति रूप।**
**राम लखन सीता सहित,**
**हृदय बसहु सुर भूप॥**

**भावार्थः** हे सङ्कटमोचन ! हे पवनतनय हनुमानजी ! तपाईंको स्वरूप माङ्गलिक एवम् आनन्ददायी छ । हे सुरभूप ! देवराज हनुमानजी ! तपाईं प्रभु श्रीरामचन्द्र, माता जानकी (सीताजी) एवम् लक्ष्मण सहित मेरो हृदयमा निवास गर्नुहोस् । ॥४३॥

***

## श्रीमद्गोस्वामी तुलसीदासकृत
# श्रीसंकटमोचनहनुमानाष्टक
## (नेपाली भावार्थसहित)

**मत्तगयन्द छन्द**

**बाल समय रबि भक्षि लियो तब**
**तीनहुँ लोक भयो अँधियारो ।**
**ताहि सों त्रास भयो जग को**
**यह संकट काहु सों जात नटारो ॥**
**देवन आनि करी बिनती तब**
**छाँडि दियो रबि कष्ट निवारो**
**को नहिं जानत है जग में कपि**
**संकटमोचन नाम तिहारो ॥१॥**

**भावार्थः** हे पवनपुत्र हनुमानजी ! जब तपाईंले आफ्नो बाल्यावस्था किंवा बाल समयमा सूर्यलाई मधुर फल सम्फेर निल्नुभयो अर्थात् खानुभयो तब तीनै लोकमा अन्धकार व्याप्त भयो । त्यही कारणले संसारभरि त्रास किंवा विपत्ति फैलियो । कसैले पनि त्यस सङ्कटलाई दूर गर्न वा हटाउन सकेनन् । ब्रह्मादि देवताहरू आएर जब तपाईंको प्रार्थना किंवा विन्ती गरे तब तपाईंले सूर्यलाई मुक्त गरिदिनु भयो अनि सबैको सङ्कट निवारण गरिदिनुभयो । हे कपीश्वर हनुमानजी ! संसारमा यस्तो को छ जसले तपाईंको सङ्कटमोचन नाम जान्दैन ॥१॥

**बालि की त्रास कपीस बसै गिरि**
**जात महाप्रभु पंथ निहारो ।**
**चौंकि महामुनि साप दियो तब**
**चाहिय कौन बिचार बिचारो ॥**
**कै द्विज रूप लिवाय महाप्रभु**
**सो तुम दास के सोक निवारो ।**
**को नहिं जानत है जग में कपि**
**संकटमोचन नाम तिहारो ॥२॥**

**भावार्थः** बालिको त्रासले सुग्रीव ऋष्यमूक (मुनिश्रापद्वारा बालिलाई प्रवेश निषेध गरिएको) पर्वतमा बस्दथे । एक दिन मुनिको भेषमा त्यस पर्वतमा आउँदै गर्नुभएका भगवान् श्रीरामलाई देखेर बालिले पठाएको योद्धा हुन सक्ने आशंकाले सुग्रीव भयभीत भए । सुग्रीवद्वारा श्रीरामको भेद जान्नकै लागि प्रेषित तपाईंले ब्राह्मणको रूप धारण गरेर प्रभु श्रीरामलाई भेट्नुभयो र साथमा लिएर आउनुभयो । श्रीरामसँग सुग्रीवको मित्रता गराई तपाईंले भक्तको शोक निवारण गर्नुभयो । हे अञ्जनीनन्दन हनुमानजी ! संसारमा यस्तो को छ जसले तपाईंको सङ्कटमोचन नाम जान्दैन ॥२॥

**अंगद के सँग लेन गये सिय**
**खोज कपीस यह बैन उचारो ।**
**जीवत ना बचियौ हम सो जु**
**बिना सुधि लाए इहाँ पगु धारो ॥**
**हेरि थके तट सिंधु सबै तब**
**लाय सिया सुधि प्रान उबारो ।**
**को नहिं जानत है जग में कपि**
**संकटमोचन नाम तिहारो ॥३॥**

**भावार्थः** हे सङ्कटमोचन हनुमानजी ! जतिबेला वानरराज सुग्रीवले तपाईंलाई अङ्गद, जाम्बवन्त आदि आफ्ना प्रमुख सेनाका साथ माता सीताजीको खोजीका निमित्त पठाउनुभएको थियो त्यतिबेला उहाँले भन्नुभएको थियो – 'जो पनि सीताजीको पत्ता नलगाई यहाँ खालि पाउ फर्किन्छ , ऊ जीवित रहनेछैन । म उसलाई प्राणदण्ड दिनेछु ।' जब सम्पूर्ण वानर सेना माता सीतालाई खोज्दा खोज्दै थकित र निराश भएर महासागरको किनारमा बसिरहेका थिए तब तपाईंले नै लङ्कामा गएर माता सीताको पत्ता लगाउनु भएको थियो अनि सबैको प्राणको रक्षा गर्नुभएको थियो । हे कपिनाथ हनुमानजी ! संसारमा यस्तो को छ जसले तपाईंको सङ्कटमोचन नाम जान्दैन ॥३॥

**रावन त्रास दई सिय को सब**
**राक्षसि सों कहि सोक निवारो ।**

**ताहि समय हनुमान महाप्रभु**
**जय महा रजनीचर मारो ॥**
**चाहत सीय असोक सों आगि सु**
**दै प्रभु मुद्रिका सोक निवारो ।**
**को नहिं जानत है जग में कपि**
**संकटमोचन नाम तिहारो ॥४॥**

**भावार्थः** जब रावणले सीताजीलाई अनेकौं त्रास देखायो । धेरै कष्ट दियो । सबै राक्षसीहरूसँग अनेक उपायले सीतालाई फकाउन समेत भन्यो । हे अञ्जनीनन्दन हनुमानजी तपाईं त्यही समय त्यहाँ पुगेर ठूलाठूला राक्षसहरूको संहार गर्नुभयो । श्रीरामचन्द्रजीको वियोगले अत्यन्त दुःखी अशोक वाटिकामा रहनुभएकी माता सीताले स्वयंलाई भस्म गर्नका लागि अशोक वृक्षसँग आगो मागिरहनुभएको थियो परन्तु तपाईंले त्यही वृक्षबाट प्रभु श्रीरामको अँगुठी दिनुभयो र माता सीताको शोक वा दुःखको निवारण गर्नुभयो । हे केसरीनन्दन हनुमानजी ! यस संसारमा यस्तो को छ जसले तपाईंको सङ्कटमोचन नाम जान्दैन ॥४॥

**बान लग्यो उर लछिमन के तब**
**प्रान तजे सुत रावन मारो ।**
**लै गृह बैद्य सुषेन समेत**
**तबै गिरि द्रोन सु बीर उपारो ॥**
**आनि सजीवन हाथ दई तब**
**लछिमन के तुम प्रान उबारो ।**
**को नहिं जानत है जग में कपि**
**संकटमोचन नाम तिहारो ॥५॥**

**भावार्थः** लङ्का युद्धमा रावणपुत्र मेघनादले जुन अमोघ शक्ति/वाण प्रहार गरेको थियो त्यो शक्ति लक्ष्मणजीको हृदय/छातीमा लाग्यो । जब शक्ति लागेर लक्ष्मणजी मूर्छित हुनुभयो, उहाँको प्राण सङ्कटमा पर्‍यो तब हे महावीर हनुमानजी तपाईंले नै लङ्कामा गएर राजवैद्य सुषेणलाई घरसहित उठाएर बलपूर्वक शिबिरमा ल्याउनु भयो, लक्ष्मणजीको उपचार सम्बन्धमा सुषेण वैद्यसँग उचित परामर्श लिनुभयो अनि द्रोणाचल पर्वतसहित मृतसञ्जीवनी बूटी ल्याएर लक्ष्मणजीको उपचार गराउनुभयो र उहाँको

प्राणको रक्षा गर्नुभयो । हे पवनपुत्र हनुमानजी ! संसारमा यस्तो को छ जसले तपाईंको सङ्कटमोचन नाम जान्दैन ॥५॥

**रावन जुद्ध अजान कियो तब**
**नाग कि फाँस सबै सिर डारो ।**
**श्रीरघुनाथ समेत सबै दल**
**मोह भयो यह संकट भारो ॥**
**आनि खगेस तबै हनुमान जु**
**बंधन काटि सुत्रास निवारो ।**
**को नहिं जानत है जग में कपि**
**संकटमोचन नाम तिहारो ॥६॥**

**भावार्थः** हे महाबली हनुमानजी ! लङ्का युद्धमा जब दशानन रावणले रामलक्ष्मण सहित सबैलाई नागपाशले बाँधिदियो, श्रीरघुनाथजी समेत दल/सेनाका सम्पूर्ण वीरहरू मूर्छित भए, श्रीरामजीका सेनामाथि ठूलो विपत्ति किंवा सङ्कट आइलाग्यो तब हे वज्रङ्गबली ! तपाईंले नै कश्यपनन्दन गरुडजीलाई बोलाएर ल्याउनु भयो अनि रामलक्ष्मणसहित सबैलाई नागपाशबाट मुक्त गराउनुभयो । फलस्वरूप मर्यादा पुरुषोत्तम श्रीरामको सेनामा आएको भय, त्रास र सङ्कट तपाईंले नै दूर गर्नुभयो किंवा निवारण गर्नुभयो । हे भक्तराज, श्रीरामदूत हनुमानजी ! संसारमा यस्तो को छ जसले तपाईंको सङ्कटमोचन नाम जान्दैन ॥६॥

**बंधु समेत जबै अहिरावन**
**लै रघुनाथ पताल सिधारो ।**
**देबिहिं पूजि भली बिधि सों बलि**
**देउ सबै मिलि मंत्र बिचारो ॥**
**जाय सहाय भयो तब ही**
**अहिरावन सैन्य समेत संहारो ।**
**को नहिं जानत है जग में कपि**
**संकटमोचन नाम तिहारो ॥७॥**

**भावार्थः** लङ्का युद्धको समयमा दशानन रावणको आदेश बमोजिम जब अहिरावणले छलपूर्वक लक्ष्मणसहित प्रभु श्रीरामलाई

अपहरण गरेर पाताललोक पुऱ्यायो । उसले आफ्ना सबै मन्त्री एवं सल्लाहकारको परामर्श अनुसार देवीको भलिभाँती किंवा विधिपूर्वक पूजा गरेर श्रीरामलक्ष्मण दुबै भाइलाई पाताल देवीको अगाडि बलि दिने निश्चय गरी बलिको तयारी गर्दै थियो । हे सकलगुणनिधान महावीर हनुमानजी ! तपाईंले त्यही समय पाताललोक पुगेर प्रभु श्रीराम र लक्ष्मणजीलाईं सहायता गर्नुभयो अनि अहिरावणलाई सेनासहित संहार गर्नुभयो । हे कपिपति हनुमानजी ! संसारमा यस्तो को छ जसले तपाईंको सङ्कटमोचन नाम जान्दैन ॥७॥

**काज किये बड देवन के तुम**
**बीर महाप्रभु देखि बिचारो ।**
**कौन सो संकट मोर गरीब को**
**जो तुम सों नहिं जात है टारो ॥**
**बेगि हरो हनुमान महाप्रभु**
**जो कछु संकट होय हमारो ।**
**को नहिं जानत है जग में कपि**
**संकटमोचन नाम तिहारो ॥८॥**

**भावार्थ:** हे महावीर हनुमानजी ! तपाईंले देवताहरूका धेरै महान् कार्यहरू सम्पन्न गर्नुभएको छ । अब तपाईं आफै हेर्नुहोस् र विचार गर्नुहोस् । मजस्तो बुद्धिहीन र दीनहीन दुःखीको यस्तो कुन सङ्कट छ जुन तपाईंले दूर गर्न/हटाउन सक्नुहुन्न । अर्थात् हे अञ्जनीनन्दन ! मेरा सबै किसिमका सङ्कटहरू तपाईंले हरण गर्न सक्नुहुन्छ । त्यसैले हे सङ्कटमोचन हनुमानजी ! म अकिञ्चनमाथि दया राखी मेरा जेजस्ता सङ्कटहरू छन् ती सबैलाई शीघ्रातिशीघ्र हटाइदिनुहोस् । हे पवनपुत्र ! हे कपीश हनुमानजी ! संसारमा यस्तो को छ जसले तपाईंको सङ्कटमोचन नाम जान्दैन ॥८॥

**लाल देह लाली लसे**
**अरु धरि लाल लँगूर ।**
**बज्र देह दानव दलन**
**जय जय जय कपि सूर ॥**

**भावार्थः** हे हनुमानजी ! तपाईंको शरीरको वर्ण लाल (रातो) छ र तपाईंको पुच्छर पनि रातो नै छ । तपाईंले आफ्नो शरीरमा रातो सिन्दुर धारण गर्नु भएको छ किंवा रातो सिन्दुर लगाइ राख्नुभएको छ अनि तपाईंको वस्त्र पनि रातो नै छ । हे बज्रङ्गबली ! तपाईंको शरीर बज्रसमान कठोर छ । तपाईं दुष्ट दानवहरूको विनाश गर्नुहुन्छ । हे महावीर हनुमानजी ! तपाईंको जय होस् ! जय होस् ! जय होस् !

***

## गुणभूषण श्रीहनुमानजी

**अतिलक्षण - सम्पन्नं माधुर्य - गुणभूषणम् ।**
**बुद्धया ह्यष्टाङ्गया युक्तं त्वमेवार्हसि भाषितुम् ॥**
**वा.रा.६।११३।२६**

सीताजीले हनुमानजीलाई भन्नुभएको छ – तिम्रो वाणी उत्तम लक्षणहरूले सम्पन्न, माधुर्य गुणले भूषित एवं बुद्धिका आठ अङ्गले युक्त वा समृद्ध छ । हे प्रियपुत्र हनुमान् यस्तो वाणी तिमीले मात्र बोल्न सक्छौ ।

***

## अजेय श्रीहनुमानजी

**आयुधानां हि सर्वेषामवध्योऽयं भविष्यति ।**
**अजरश्चामरश्चैव भविष्यति न संशयः ॥**
**अमित्रभयदो ह्येष मित्राणमभयप्रदः ।**
**अजेयो भविता युद्धे लिङ्गेनोक्तं पुनः पुनः ॥**
**स्कन्धपुराण-अवन्ती.चतुरशीति.७९।३५-३६**

श्रीमद्‌गोस्वामी तुलसीदासकृत

# श्रीबजरंगबाण

## (नेपाली भावार्थसहित)

### दोहा

**निश्चय प्रेम प्रतीति ते,**
**बिनय करैं सनमान।**
**तेहि के कारज सकल सुभ,**
**सिद्ध करैं हनुमान ॥१॥**

**भावार्थः** जो मानिस मर्यादा पुरुषोत्तम भगवान् श्रीरामका प्रियभक्त महावीर हनुमानजीमा आफ्नो निश्चय प्रेम, अविछिन्न श्रद्धा एवम् विश्वास राख्दछ । महावीर बजरङ्गबली हनुमानजीको कृपा र आशीर्वादले उसका सम्पूर्ण कार्यहरू सिद्ध हुन्छन् ॥१॥

### चौपाई

**जय हनुमंत संत हितकारी।**
**सुनि लीजै प्रभु बिनय हमारी ॥२॥**
**जन के काज विलंब न कीजै।**
**आतुर दौरि महासुख दीजै ॥३॥**

**भावार्थः** हे सकलगुणनिधान हनुमानजी ! तपाई सम्पूर्ण साधु सन्तहरूका निमित्त हितकारी हुनुहुन्छ अर्थात् हे प्रभु तपाई सन्तहरूको हित गर्नेवाला हुनुहुन्छ । हे हनुमानजी ! कृपया मेरो प्रार्थना स्वीकार गर्नुहोस् । हे सङ्कटमोचन हनुमानजी ! अब बिलम्ब नगरिदिनुहोस् । हे भक्तवत्सल ! ममा कृपादृष्टि दिई शीघ्रातिशीघ्र आएर आफ्ना आर्ती भक्तजनहरूलाई महासुख किंवा आत्यन्तिक सुख प्रदान गर्नुहोस् ॥२-३॥

**जैसे कूदि सिंधु के पारा।**
**सुरसा बदन पैठि बिस्तारा ॥४॥**
**आगे जाय लंकनी रोका।**
**मारेहु लात गई सुरलोका ॥५॥**

**भावार्थः** हे श्रीरामदूत हनुमानजी ! जसरी तपाईंले विशाल समुद्रलाई सहजरूपमा पार गर्नुभएको थियो । यस सन्दर्भमा अत्यन्त भयङ्कर स्वरूप किंवा शरीर भएकी सुरसाको मुखभित्र प्रवेश गरेर सकुशल बाहिर निस्कनु भएको थियो। हे केसरीनन्दन हनुमानजी ! जब तपाईंलाईं स्वर्णनगरी लङ्कामा प्रवेश गर्न लङ्किनी नामकी राक्षसीले रोकेकी थिई तब तपाईंले आफ्नो पाउको एकै प्रहारले उसलाई स्वर्गलोक पठाउनु भएको थियो किंवा राक्षसी लङ्किनीले मृत्युलाई प्राप्त गरेकी थिई ॥४-५॥

**जाय विभीषन को सुख दीन्हा ।**
**सीता निरखि परम-पद लीन्हा ॥६॥**
**बाग उजारि सिंधु महँ बोरा ।**
**अति आतुर जमकातर तोरा ॥७॥**

**भावार्थः** हे भक्तवत्सल हनुमानजी ! तपाईंले लङ्कामा गएर विभीषणलाई भक्तिरूपी सुखप्रदान गर्नुभयो । हे अञ्जनीनन्दन हनुमानजी ! तपाईंले जगज्जननी सीताजीको असीम कृपाले परमपदरूप भगवद्भक्ति प्राप्त गर्नुभएको छ । हे सीताशोक-विनाशक हनुमानजी ! तपाईंले लङ्कामा गएर अशोकवाटिकालाईं ध्वस्त पारेर किंवा विनाश गरेर समुद्रमा डुबाइदिनुभयो । लङ्कापति रावणका रक्षक किंवा अशोक वाटिकाका रक्षक राक्षस/असुरहरूलाई पनि दण्ड दिनुभयो ॥६-७॥

**अछय कुमार को मारि संहारा ।**
**लूम लपेटि लंक को जारा ॥८॥**
**लाह समान लंक जरि गई ।**
**जय जय धुनि सुरपुर नभ भई ॥९॥**

**भावार्थः** हे केसरीनन्दन हनुमानजी ! तपाईंले अतिशीघ्र गरी रावणपुत्र अक्षयकुमारलाई मार्नुभयो किंवा संहार गर्नुभयो । अनि आफ्नो शक्तिशाली (राक्षसद्वारा पुच्छरमा कपडा लपेटेर तेल छर्किएको) पुच्छरले स्वर्णमयी लङ्कापुरीलाई जलाउनु भयो। हे जानकीशोक-विनाशक हनुमानजी ! तपाईंले लाहले बनेको भवनलाई जस्तैगरी स्वर्णनिर्मित लङ्कालाई जलाई उजाड बनाइदिनुभयो । जसले स्वर्गमर्त्य सबैतिर तपाईंको जय होस् जय होस् को ध्वनि गुन्जिन थाल्यो किंवा हुन लाग्यो ॥८-९॥

**अब विलंब केहि कारन स्वामी ।**
**कृपा करहु उर अंतरयामी ॥१०॥**
**जय जय लखन प्रान के दाता ।**
**आतुर होइ दुख करहु निपाता ॥११॥**

**भावार्थः** हे अञ्जनीनन्दन हनुमानजी ! तपाईं त अन्तर्यामी हुनुहुन्छ । सबैको मनको भाव बुझ्नुहुन्छ । तर आज किन आफ्ना भक्तको काममा यति विलम्ब गर्नुहुन्छ । हे स्वामी ! हे दयानिधान ! कृपा गरी यस अकिञ्चिन भक्तको दुःख निवारण गरिदिनुहोस् । हे केसरीनन्दन हनुमानजी ! तपाईंको जय होस् ! जय होस् ! तपाईंले जसरी मेघनादको शक्तिद्वारा मूर्च्छित लक्ष्मणजीको प्राण बचाउनु भएको थियो त्यसरी नै अत्यन्त अधीर, व्यथित म दुःखीको दुःखकष्टको नाश गर्नुहोस् ॥१०-११॥

**जय हनुमान जयति बल-सागर ।**
**सूर-समूह-समरथ भट-नागर ॥१२॥**
**ॐ हनु हनु हनु हनुमंत हठीले ।**
**बैरिहि मारू बज्र की कीले ॥१३॥**

**भावार्थः** हे गिरिधर ! तपाईंको जय होस् ! जय होस् ! हे श्रीरामदूत हनुमानजी ! तपाईं बलको सागर हुनुहुन्छ । तपाईं इन्द्रादि देवगण तथा भगवान् विष्णुसमान युद्धकलामा पनि अत्यन्त निपुण किंवा सामर्थ्यवान् हुनुहुन्छ । ॐ हनु हनु हनु हनु हनुमानजी ! तपाईं अत्यन्त दृढ र आफ्ना प्रियभक्तहरूको रक्षार्थ सदैव हठी हुनुहुन्छ । हे महावीर हनुमानजी ! मेरा शत्रुहरूमाथि बज्रका कीलाहरूद्वारा प्रहार गर्नुहोस् । हे बजरङ्गबली ! शत्रुहरूबाट मेरो रक्षा गर्नुहोस् ॥१२-१३॥

**ॐ ह्रीं ह्रीं ह्रीं हनुमंत कपीशा ।**
**ॐहुँ हुँ हुँ हनु अरि उर सीसा ॥१४॥**
**जय अंजनिकुमार बलवंता ।**
**संकर सुवन बीर हनुमंता ॥१५॥**

**भावार्थः** ॐ ह्रीं ह्रीं ह्रीं हनुमन्त हे कपीश्वर ! ॐ हुँ हुँ हुँ हनु हे हनुमानजी ! तपाईं मेरा सबै शत्रुहरूको शिर आदि अङ्गलाई छिन्नभिन्न गरिदिनु होस् किंवा मेरा विकृत बाह्याभ्यन्तर शत्रुहरू (काम,

क्रोध, लोभ, मोह आदि) लाई विनाश गर्नुहोस् । हे अञ्जनीकुमार ! महाबलशाली हनुमानजी ! तपाईंको जय होस् ! जय जय होस् ! जय होस् ! प्रभु तपाईं भगवान् शंकरको अंशभूत किंवा रुद्रावतार हुनुहुन्छ । हे रामभक्त हनुमानजी ! तपाईं धीरवीर हुनुहुन्छ ॥१४-१५॥

**बदन कराल काल-कुल-घालक ।**
**राम सहाय सदा प्रतिपालक ॥१६॥**
**भूत प्रेत पिशाच निशाचर ।**
**अगनि बेताल काल मारी मर ॥१७॥**

**भावार्थः** हे पवनपुत्र हनुमानजी ! तपाईंको मुखमण्डल किंवा शरीर भयङ्कर डरलाग्दो छ अर्थात् कालसमान छ । तपाईंले सदैव प्रभु श्रीरामलाईं सहायता गर्नुभएको छ । उहाँको सेवाका लागि तपाईं सदैव तत्पर रहनुहुन्छ । हे महाबलशाली हनुमानजी ! तपाईं अतिसूक्ष्म तर शक्तिशाली भूत, प्रेत, पिशाच, निशाचर तथा अग्नि बैताल आदिको पीडाबाट हामीलाई मुक्त गराइदिनुहोस् । हे हनुमानजी ! ती भूत, प्रेत, पिशाच, निशाचर आदि खराब शक्तिलाई समाप्त गरिदिनुहोस् ॥१६-१७॥

**इन्हें मारु तोहि सपथ राम की ।**
**राखु नाथ मरजाद नाम की ॥१८॥**
**सत्य होहु हरि सपथ पाइ कै ।**
**रामदूत धरु मारु धाइ कै ॥१९॥**

**भावार्थः** हे रामभक्त हनुमानजी ! तपाईंले वज्र, गदा आदिको प्रहारद्वारा यी सबै खराब शक्तिलाई नाश गरिदिनुहोस् । हे हनुमानजी ! तपाईंका आफ्नै प्रभु श्रीरामको शपथ छ । यिनीहरूलाई नाश गरेर प्रभु श्रीरामको नामको मर्यादा राख्नुहोस् । हे शत्रुविनाशक महावीर हनुमानजी ! तपाईंका ईष्टदेव भगवान् श्रीहरिको शपथ छ मेरो पुकार सुनिदिनुहोस् र मेरो विन्ती पूरा गरिदिनुहोस् । हे रामदूत हनुमानजी मेरा भित्रीबाहिरी समस्त शत्रु र बिघ्नबाधाहरूलाई विलय/विनाश गरिदिनुहोस् ॥१८-१९॥

**जय जय जय हनुमंत अगाधा ।**
**दुःख पावत जन केहि अपराधा ॥२०॥**

**पूजा जप तप नेम अचारा ।**
**नहि जानत कछु दास तुम्हारा ॥२१॥**

**भावार्थः** हे अगाध शक्ति र करुणाका प्रतिमूर्ति हनुमानजी तपाईंको जय होस् जय होस् जय होस् । हे हनुमानजी ! तपाईंको सेवक सदैव प्रभुको जय जयकार गर्छ तरपनि यो सेवक किन दुःखी छ । यसले कुन अपराध गरेको छ र दुःखी छ । हे पवनपुत्र हनुमानजी ! यस दासलाई त तपाईंको पूजाको विधि, जपको नियम, तपस्याको प्रक्रिया र आचार-विचार सम्बन्धी कुनै पनि ज्ञान छैन । तथापि हे कृपानिधान हनुमानजी ! तपाईंले नै दया गरेर यस अज्ञानी सेवक तुलसीदासको उद्धार गर्नुहोस् ॥२०-२१॥

**वन उपवन मग गिरि गृह माहीं ।**
**तुम्हरे बल हौं डरपत नाहीं ॥२२॥**
**जनकसुता हरि-दास कहावौ ।**
**ताकि सपथ बिलम्ब न लावौ ॥२३॥**

**भावार्थः** हे महावीर हनुमानजी ! यो तपाईंको बलकृपाकै प्रभाव हो जुन तपाईंको शरणमा छ त्यो कहिल्यै पनि कुनै प्रकारको भयबाट भयभीत हुनु पर्दैन । चाहे त्यो कुनै जंगल होस् सुन्दर उपवन होस्, घर होस् या पर्वत नै किन नहोस् । हे केसरीनन्दन हनुमानजी ! तपाईं जनकनन्दिनी माता सीता एवं भगवान् श्रीरामचन्द्रको सेवक, दास किंवा भक्त कहलाउनुहुन्छ । त्यस कारण तपाईंका आफ्नै प्रभु श्रीरामको शपथ छ । अब यो कार्य गर्नमा रतिभर पनि विलम्ब नगर्नुहोस् ॥२२-२३॥

**जय-जय-जय-धुनि होत अकाशा ।**
**सुमिरत होय दुसह दुख नाशा ॥२४॥**
**चरन पकरि कर जोरि मनावौं ।**
**यहि औसर अब केहि गोहरावौं ॥२५॥**

**भावार्थ**ः हे महावीर हनुमानजी ! तपाईंको जय जय जय (जयकार) ध्वनि आकाशमा पनि गुञ्जायमान भइरहेको छ । जसले तपाईंको स्मरण गर्दछ निश्चय नै उसका सबै असह्य दुःख र पीडाहरू

निवारण हुन्छन् । हे कृपानिधान हनुमानजी ! यो दास तपाईंको चरणमा परेको छ । दुबै हात जोडेर तपाईंसँग अफ्नो विपत्ति बताइरहेको छ । हे कपिश्रेष्ठ ! यस संसार किंवा ब्रह्माण्डमा नै तपाईं बाहेक मेरो अरु कुन छ जसलाई विपत्तिको समाचार सुनाएर आफ्नो रक्षार्थ पुकार गर्न सकूँ ॥२४-२५॥

**उठ उठ चल तोहि राम-दोहाई ।**
**पायँ परौं कर जोरी मनाई ॥२६॥**
**ॐ चम चम चम चम चपल चलंता ।**
**ॐ हनु हनु हनु हनु हनु हनुमंता ॥२७॥**

**भावार्थः** हे पवनसुत हनुमानजी ! म तपाईंको चरणको शरणमा परेको छु । म अकिञ्चन तपाईंसँग दुई हात जोडेर विन्ती किंवा प्रार्थना गर्दछु । हे शरणागतवत्सल हनुमानजी ! कृपा गरेर मलाई सही मार्ग प्रदर्शन गरिदिनुहोस् । हे भक्तवत्सल हनुमानजी ! तपाईं चं चं चं चं चपल चञ्चल किंवा धेरै फुर्तिलो हुनुहुन्छ । ॐ हनु हनु हनु हनु हनुमंता हनुमानजी तपाईं अतुलित बलशाली हुनुहुन्छ । हे रुद्रावतार महावीर हनुमानजी ! चाँडै प्रकट भएर मेरो दुःख निवारण गर्नुहोस् ॥२६-२७॥

**ॐ हं हं हाँक देत कपि चंचल ।**
**ॐ सं सं सहमि पराने खल-दल ॥२८॥**
**अपने जन को तुरत उबारौ ।**
**सुमिरत होय आंनद हमारौ ॥२९॥**

**भावार्थः** हे केसरीनन्दन हनुमानजी ! तपाईं चञ्चल किंवा फुर्तिलो हुनुहुन्छ । तपाईंले हं हं हांक दिनेबित्तिकै ठूलाठूला राक्षस दल किंवा खराब शक्ति पनि स्वतः सं सं सहम (पलायन/नष्ट) हुन्छन् । हे अञ्जनीनन्दन हनुमानजी ! तपाईंले आफ्ना भक्तहरूको तुरुन्त कल्याण/उद्धार गर्नुहोस् । तपाईंको सुमिरन स्मरण गर्नाले मात्रपनि हामी सबै भक्तजनहरूलाईं सुख/आनन्द प्राप्त होस् ॥२८-२९॥

**यह बजरंग-बाण जेहि मारै ।**
**ताहि कहौ फिरि कबन उबारै ॥३०॥**
**पाठ करै बजरंग-बाण की ।**
**हनुमत रच्छा करैं प्रान की ॥३१॥**

**भावार्थः** हे बजरङ्गबली हनुमानजी ! जो कसैले पनि जो कसै (दुरात्मा शक्ति) लाई यो बजरंगबाण (जपपाठ) को प्रयोग गर्दछ त्यस दुरात्मालाई कसले पो बचाउन सक्ला र ? अर्थात् उसलाई कसैले पनि बचाउन सक्दैन । हे महावीर हनुमानजी ! जसले यस बजरंग बाणको नित्य जपपाठ गर्दछ । करुणाका मूर्ति पवननन्दन हनुमानजी ! उसको प्राणको रक्षा श्रीरामभक्त हनुमानजी तपाईं स्वयं आँफैले नै गर्नुहुन्छ ॥३०-३१॥

**यह बजरंग-बाण जो जापैं ।**
**तासों भूत-प्रेत सब काँपैं ॥३२॥**
**धूप देय जो जपै हमेसा ।**
**ताके तन नहिं रहै कलेसा ॥३३॥**

**भावार्थः** हे सङ्कटमोचन हनुमानजी ! जसले यस 'बजरंगबाण'को जपपाठ गर्दछ । यसको जपपाठको प्रभावले उसदेखि भूत-प्रेत सबै काँप्दछन् । कुनैपनि दुरात्मा/खराब शक्ति उसको नजिक आउन सक्दैनन् । जुन मानिसले श्रीरामभक्त बजरङ्गबली हनुमानजीको पूजा/अर्चना (धूप, दीप, नैवेद्य आदि अर्पण) गरी श्रद्धा एवं भक्तिपूर्वक यस 'बजरंगबाण' को जप-पाठ गर्दछ उसको शरीरमा कुनैपनि दुःख र कष्ट रहँदैन ॥३२-३३॥

**दोहा**

**उर प्रतीति दृढ सरन ह्वै पाठ करै धरि ध्यान ।**
**बाधा सब हर करै सब काम सफल हनुमान ॥३७॥**

**भावार्थः** जो मानिस मर्यादा पुरुषोत्तम भगवान् श्रीरामका प्रियभक्त कपीश्वर हनुमानजीको शरण परी अविच्छिन्न प्रेम (भक्ति) अनि अटुट श्रद्धासहित उहाँको ध्यान गरी पाठ गर्दछ । अञ्जनीनन्दन महावीर हनुमानजीको कृपा र आशीर्वादले उसका सम्पूर्ण बाधाहरू नाश हुन्छन् । सबै कार्यहरू सिद्ध हुन्छन् ॥३६-३७॥

***

**श्रीहनुमत्गायत्री -१**

**ॐ रामदूताय विद्महे कपिराजाय**
**धीमहि तन्नो मारुतिः प्रचोदयात् ।**

***

श्रीमद्गोस्वामी तुलसीदासकृत

# श्रीहनुमानबाहुक

## (नेपालीमा भावार्थसहित)

### छप्पय

**सिंधु-तरन, सिय-सोच-हरन, रबि-बालबरन तनु ।**
**भुज बिसाल, मूरति कराल कालहुको काल जनु ॥**
**गहन-दहननिरदहन लंक निःसंक, बंक-भुव ।**
**जातुधान-बलवान-मान - मद-दवन-पवनसुव ॥**
**कह तुलसिदास सेवत सुलभ**
**सेवक हित संतत निकट ।**
**गुनगनत, नमत, सुमिरत, जपत,**
**समन सकल-संकट-बिकट ॥१॥**

**भावार्थः** श्रीरामदूत हनुमानजीको वर्ण उदयकालीन सूर्य समान स्वर्णिम आभायुक्त छ । उहाँ महासागर पार गरी श्रीजानकीजीको शोकहरण गर्नुहुन्छ । उहाँका बाहु विशाल (घुडासम्म फैलिएका) छन् । उहाँको स्वरूप दुष्टहरूका लागि भयप्रद छ । उहाँ कालका पनि काल हुनुहुन्छ । उहाँले जलाउन अयोग्य लङ्कारूपी गहनवनलाई निशङ्क जलाउनु हुन्छ । उहाँको आँखीभौं कुटिल/टेढो छ । उहाँ पराक्रमशाली राक्षसहरूको गर्वलाई नाश गर्नुहुन्छ । तुलसीदासजी भन्नुहुन्छ - यस्ता विशेष गुणयुक्त श्रीपवनकुमार हनुमानजीको सेवा गर्दा उहाँ सजिलै प्रसन्न हुनुहुन्छ किंवा उहाँलाई प्राप्त गर्न सकिन्छ । उहाँ आफ्ना सेवकहरूको कल्याणार्थ सेवकहरूकै नजिक रहनुहुन्छ । उहाँको स्तुति गाउँदा, नमस्कार गर्दा, नाम जप्दा र स्मरण गर्दा विकट सङ्कटहरू पनि तत्काल नाश हुन्छन् ॥१॥

**स्वर्न-सैल-संकास कोटि-रबि-तरुन-तेज-घन ।**
**उर बिसाल, भुज-दंड चंड नख बज्र बज्रतन ॥**
**पिंग नयन, भृकुटी कराल रसना दसनानन ।**
**कपिस केस,करकस लँगूर,खल-दल बल भानन ॥**

**कह तुलसिदास बस जासु उर मारुतसुत मूरति बिकट ।**
**संताप पाप तेहि पुरुष पहि सपनेहुँ नहिं आवत निकट ॥२॥**

**भावार्थः** महावीर हनुमानजी स्वर्णमय पर्वत सुमेरुसदृश अतिसुन्दर र विशाल शरीरवाला हुनुहुन्छ । उहाँमा मध्याह्नको करोडौं सूर्यजस्तै असीम तेजपुञ्ज छ । पवनपुत्र हनुमानजी विशाल हृदयवाला तथा वज्रसमानका अति बलिया हात, नङ र देहवाला र पहेँलो आँखा अनि विकराल भृकुटी, जिब्रो, दाँत र मुखवाला हुनुहुन्छ । उहाँ खैरो रङको कपाल, कठोर पुच्छरवाला अनि दुष्टहरूको दलको विशेष बल किंवा शक्ति समूल नष्ट गर्नेवाला हुनुहुन्छ । गोस्वामी तुलसीदासजी भन्नुहुन्छ - जसको हृदयमा यस्ता विशेष विशेषण गुणयुक्त श्रीमारुतीनन्दन महावीर हनुमानजीको विकट मूर्ति किंवा अत्यन्त डरलाग्दो स्वरूप अविच्छन्न रूपमा स्वरूपतः निवास गर्छन् त्यस्ता पुरुषहरूका नजिक कुनैपनि प्रकारको सन्ताप किंवा दुःख र ताप सपनामा पनि कहिल्यै आउँन सक्दैनन् ॥२॥

**झूलना**

**पंचमुख-छमुख-भृगुमुख्य भट असुर-सुर,**
**सर्व-सरि-समर समरत्थ सूरो ।**
**बाँकुरो बीर बिरुदैत बिरुदावली,**
**बेद बंदी बदत पैजपूरो ॥**
**जासु गुनगाथ रघुनाथ कह, जासु बल,**
**बिपुल-जल-भरित जग-जलधि झूरो ।**
**दुवन-दल-दमनको कौन तुलसीस है,**
**पवनको पूत रजपूत रूरो ॥३॥**

**भावार्थः** पञ्चमुख भगवान् श्रीसदाशिव, षण्मुख स्वामी कार्तिकेय, परशुधारी भगवान् श्रीराम, युद्धकौशल दैत्य-दानव तथा देवगण सबै युद्धरूपी महानदी पार गर्न सक्ने कुशल योद्धा हुन् । तथापि वेदरूपी वन्दीजन भन्छन् - हनुमानजी तपाईं दृढप्रतिज्ञ, कीर्तिमान्, यशस्वी, सफल अनि चतुर योद्धा हुनुहुन्छ । जसको अतिशय पराक्रमका कारण अपार जलले भरिएको विश्वसमुद्र सुक्यो भनी रघुनाथजी आफ्नै श्रीमुखबाट कथा सुनाउँदै हनुमानजीका गुणहरूको बखान गर्नुहुन्छ ।

तुलसीदासका स्वामी सुन्दर राजपूत किंवा पवनकुमार हनुमानजीका अतिरिक्त राक्षसहरूको दल किंवा भीडलाई नष्ट गर्न सक्ने अर्को यस लोकमा को नै छ र ? अर्थात् हनुमानजीले नै स्वभावतः अत्यन्त क्रूर ती दुष्ट राक्षसहरूको समूहलाई समूल नष्ट गर्न सक्नुहुन्छ ॥३॥

**घनाक्षरी**

**भानुसों पढ़न हनुमान गयो भानु मन-**
**अनुमानि सिसुकेलि कियो फेरफार सो ।**
**पाछिले पगनि गम गगन मगन-मन,**
**क्रमको न भ्रम, कपि बालक-बिहार सो ॥**
**कौतुक बिलोकि लोकपाल हरि हर बिधि,**
**लोचननि चकाचौंधी चित्तनि खभार सो ।**
**बल कैंधौं बीररस धीरज कै, साहस कै,**
**तुलसी सरीर धरे सबनिको सार सो ॥४॥**

**भावार्थः** हनुमानजी श्रीसूर्यनारायणका समीपमा विद्या अध्ययन गर्नका लागि जानुभयो । सूर्यदेवले मनमा बच्चाको खेल सम्झेर बहाना बनाउँदै भन्नुभयो - म चुपचाप उभिन किंवा स्थिर रहन सक्दिन । आमने-सामने नभइकन अध्ययन गर्नगराउन सम्भव छैन । हनुमानजीले सूर्यतर्फ मुख गरेर अनि आफ्नो पीठतर्फ पाउ बढाएर प्रसन्न मन आकाश मार्गमा बच्चाको खेलजस्तै हिड्नुभयो तर यसले पाठ्यक्रम (पढ्ने क्रम) मा कुनैपनि प्रकारको भ्रम पैदा गरेन । यो अचम्मको खेल देखेर इन्द्रादि लोकपाल, विष्णु, रुद्र र ब्रह्माका आँखा आश्चर्य चकित भए । उनीहरूका मनमा खलबली उत्पन्न भयो । तुलसीदासजी भन्नुहुन्छ - ब्रह्मादि देवताहरू सबैले सोच्न थाले - न बल, न वीररस, न धैर्य, न साहस, न ज्ञान यी सबैको सार महावीर हनुमानजीको शरीरमा समाहित भएको छ ॥४॥

**भारतमें पारथके रथकेतु कपिराज,**
**गाज्यो सुनि कुरुराज दल हलबल भो ।**
**कह्यो द्रोन भीषम समीरसुत महाबीर,**
**बीर-रस-बारि-निधि जाको बल जल भो ॥**

**बानर सुभाय बालकेलि भूमि भानु लागि,**
**फलँग फलाँगहूँतें घाटि नभतल भो।**
**नाइ-नाइ माथ जोरि-जोरि हाथ जोधा जोहैं,**
**हनुमान देखे जगजीवनको फल भो ॥५॥**

**भावार्थः** महाभारत युद्धको आरम्भमै अर्जुनको रथको ध्वजामा बसेर कपिराज हनुमानजीले गर्जना गर्नुभयो। त्यो गर्जना सुनेर दुर्योधन पक्षका सेनामा घबराहट उत्पन्न भयो किंवा आतंक नै मच्चियो। द्रोणाचार्य र भीष्मले भन्नुभयो - यी महाबली पवनकुमार हुन् जसको बल नै वीररसरूपी सागरजल भएको हो। स्वाभाविक नै बालकहरूको खेलसमान यिनको पृथ्वीदेखि सूर्यसम्मको दौडले आकाशीय क्षेत्रलाई एक कदमभन्दा पनि कम गरेको थियो। ती सबै योद्धाहरूले श्रद्धापूर्वक आफ्नो शिर झुकाएर दुबै हात जोडेर केसरीनन्दन महाबली हनुमानजीको दर्शन गरे। यसरी हनुमानजीको दर्शन पाएर योद्धाहरूलाई संसारमा बाँच्नु किंवा रहनुको फल प्राप्त भएको अनुभूति भयो ॥५॥

**गोपद पयोधि करि होलिका ज्यों लाई लंक,**
**निपट निसंक परपुर गलबल भो।**
**द्रोन-सो पहार लियो ख्याल ही उखारि कर,**
**कंदुक-ज्यों कपिखेल बेल कैसो फल भो ॥**
**संकटसमाज असमंजस भो रामराज,**
**काज जुग-पूगनिको करतल पल भो।**
**साहसी समत्थ तुलसीको नाह जाकी बाँह,**
**लोकपाल पालनको फिर थिर थल भो ॥६॥**

**भावार्थः** हनुमानजीले समुद्रलाई गोपद जलसमान पार गर्नुभयो। निर्भय भएर लङ्काजस्तो सुरक्षित नगरीलाई पनि होलिकाजस्तै जलाउनुभयो। जसबाट शत्रुनगरी लङ्कामा ठूलो गड़बड़ी मच्चियो। द्रोणाचलजस्तो विशाल काय पर्वतलाई खेलखेलमै उखेलेर भकुण्डोझैं उठाउनुभयो। त्यो त कपिराज हनुमानजीका लागि बेलको फलसमान क्रीडाको सामग्री बन्यो। रामराज्यमा अपार सङ्कट (लक्ष्मण-शक्ति) बाट असमञ्जस उत्पन्न भयो। त्यस समय जसको भुजबल (पराक्रम) बाट

युग समूहमा हुनेवाला काम पलभरमै मुट्ठीमा आयो, सङ्कट टरेर गयो । तुलसीदासका स्वामी महावीर हनुमानजी बडो सामर्थ्यवान् र साहसी हुनुहुन्छ । जसका ती बाहुभुजाहरू लोकपालहरूलाई पालन गर्न तथा उनीहरूलाई स्थिरतापूर्वक स्थापित गर्ने स्थान भए ॥६॥

**कमठकी पीठि जाके गोडनिकी गाड़ैं मानो,**
**नापके भाजन भरि जलनिधि जल भो ।**
**जातुधान-दावन परावनको दुर्ग भयो,**
**महामीनबास तिमि तोमनिको थल भो ॥**
**कुम्भकरन-रावन पयोदनाद-ईंधनको,**
**तुलसी प्रताप जाको प्रबल अनल भो ।**
**भीषम कहत मेरे अनुमान हनुमान,**
**सारिखो त्रिकाल न त्रिलोक महाबल भो ॥७॥**

**भावार्थः** महाबली हनुमानजीको पदभारले कछुवाको पीठमा बनेका पाउका खाल्टाहरू समुद्रको जल भर्नका लागि मानो नापका पात्र किंवा भाँडाहरू भए । राक्षसहरूलाई नाश गर्ने बेलामा समुद्र नै उनीहरू भागेर लुक्ने गढ़ किंवा सुरक्षित ठाउँ भयो । त्यहीं ठूलाठूला मत्स्य (माछा) हरूको बस्ने उपयुक्त ठाउँ बन्यो । तुलसीदासजी भन्नुहुन्छ - लङ्काधिपति रावण, कुम्भकर्ण र मेघनादरूपी ईन्धन (दाउरा) जलाउनका निमित्त जसको प्रताप प्रचण्ड अग्नि भयो । ती महावीर हनुमानजीका बारेमा भीष्मपितामह भन्नुहुन्छ - मेरो विचार र दृष्टिमा महावीर हनुमानजीका समान अत्यन्त बलवान् तीनै काल र तीनै लोकमा कोही भएनन् ॥७॥

**दूत रामरायको, सपूत पूत पौनको, तू**
**अंजनी को नंदन प्रताप भूरि भानु सो ।**
**सीय-सोच-समन, दुरित-दोष-दमन,**
**सरन आये अवन, लखनप्रिय प्रान सो ॥**
**दसमुख दुसह दरिद्र दरिबेको भयो,**
**प्रकट तिलोक ओक तुलसी निधान सो ।**
**ज्ञान-गुनवान बलवान सेवा सावधान,**
**साहेब सुजान उर आनु हनुमान सो ॥८॥**

**भावार्थः** महावीर हनुमानजी ! तपाईं राजा रामचन्द्रजीका दूत, पवनदेवका सुयोग्य पुत्र, अञ्जनीदेवीलाई आनन्द दिनेवाला, असङ्ख्य सूर्यहरूका समान महातेजस्वी हुनुहुन्छ । जगज्जननी सीताजीको शोकलाई नाश गर्नेवाला, पाप तथा अवगुण नष्ट गर्नेवाला तथा शरणागतको रक्षा गर्नेवाला तपाईं लक्ष्मणजीका निम्ति प्राणसमान प्रिय हुनुहुन्छ । तुलसीदासजीको दुस्सह दरिद्ररूपी रावणको नाश गर्नका लागि तपाईं तीनै लोकमा आश्रयका रूपमा प्रकट हुनुभएको हो । अरे मानिसहरू हो ! तपाईंहरू पनि ज्ञानवान्, गुणवान्, बलवान् र परसेवा गर्न किंवा अरूलाई आराम/सुख दिनमा सदैव तत्पर/सजग अनि चतुर हनुमानजीलाई सदैव आफ्नो हृदयमा बसाउनुहोस् ॥८॥

**दवन-दुवन-दल भुवन-बिदित बल,**
**बेद जस गावत बिबुध बंदीछोरको ।**
**पाप-ताप-तिमिर तुहिन-विघटन-पटु,**
**सेवक-सरोरुह सुखद भानु भोरको ॥**
**लोक-परलोक तें बिसोक सपने न सोक,**
**तुलसीके हिये है भरोसो एक ओरको ।**
**रामको दुलारो दास बामदेवको निवास,**
**नाम कलि-कामतरु केसरी-किसोरको ॥९॥**

**भावार्थः** - दैत्यदानवहरूको सेनालाई नाश गर्नमा जसको पराक्रम विश्वविख्यात छ । वेद यशोगान गर्दै भन्छन् - देवताहरूलाई बन्दीगृहबाट छुटाउनेवाला महावीर पवनकुमारका अतिरिक्त अर्को को नै छ र ? हनुमानजी तपाईं पापान्धकार तथा कष्टरूपी कुहिरोलाई हटाउन प्रवीण तथा सेवकरूपी कमललाई प्रसन्न गराउन प्रातःकालिक सूर्यका समान हुनुहुन्छ । तुलसीको हृदयमा एकमात्र रामभक्त हनुमानजीको भरोसा र विश्वास छ । उहाँमा स्वप्नमा पनि इहलोक र परलोकको कुनै चिन्ता छैन । उहाँ हनुमानजीकै भरोसामा सदैव शोकरहित रहनुहुन्छ । भगवान् श्रीरामचन्द्रजीका प्रियभक्त वामदेवनिवास, रुद्रावतार केसरीकिशोर हनुमानजीको नाम कलि कालमा मनोबाञ्छित फलप्रदान गर्नेवाला कल्पवृक्षसमान छ ॥९॥

**महाबल-सीम महाभीम महाबानइत,**
**महाबीर बिदित बरायो रघुबीरको ।**
**कुलिस-कठोरतनु जोरपरै रोर रन,**
**करुना-कलित मन धारमिक धीरको ॥**
**दुर्जनको कालसो कराल पाल सज्जनको,**
**सुमिरे हरनहार तुलसीकी पीरको ।**
**सीय-सुख-दायक दुलारो रघुनायकको,**
**सेवक सहायक है साहसी समीरको ॥१०॥**

**भावार्थः** हे हनुमानजी ! तपाईं अत्यन्त पराक्रमशाली, अतिभयानक अनि शूरवीर हुनुहुन्छ। श्रीरघुपतिद्वारा चुनिएका प्रियभक्त हनुमानजी महाबलवान् र विश्वविख्यात वीरयोद्धा हुनुहुन्छ । तपाईं वज्रसमान कठोर शरीरवाला हुनुहुन्छ । तपाईंले जोड दिंदा किंवा बल गर्दा रणस्थलमा कोलाहल मच्चिन्छ । तपाईं सुन्दरता, करुणा र धैर्यको स्थान अनि अन्तःकरण किंवा मनबाट धर्माचरण गर्नेवाला महापुरुष हुनुहुन्छ । तपाईं दुष्टहरूको लागि काल समान भयावह अनि सज्जनहरूको लागि पालनहार हुनुहुन्छ। हे हनुमानजी तपाईंको नाम स्मरण गर्नाले मात्र पनि तुलसीदास आदि भक्तका सारा दुःखहरू हरण हुन्छन् । सीताजीलाई सुख दिनेवाला, श्रीरघुनाथ जीका अतिप्रिय र सेवकहरूका सहायक बनी सहायता गर्नमा प्रवीण हे पवननन्दन हनुमानजी तपाईं अत्यन्त साहसी हुनुहुन्छ ॥१०॥

**रचिबेको बिधि जैसे, पालिबेको हरि, हर**
**मीच मारिबेको, ज्याइबेको सुधापान भो ।**
**धरिबेको धरनि, तरनि तम दलिबेको,**
**सोखिबे कृसानु, पोषिबेको हिम-भानु भो ॥**
**खल-दुःख-दोषिबेको, जन-परितोषिबेको,**
**माँगिबो मलीनताको मोदक सुदान भो ।**
**आरतकी आरति निवारिबेको तिहूँ पुर,**
**तुलसीको साहेब हठीलो हनुमान भो ॥११॥**

**भावार्थः** पवनपुत्र हनुमानजी तपाईं सृष्टिरचनाका लागि ब्रह्मा, पालन गर्नका लागि विष्णु, संहार गर्नका लागि रुद्र तथा जीवन बँचाउनका लागि सुधापान समान हुनुहुन्छ । तपाईं धारण गर्नमा धरती, अन्धकार विनाश गर्नमा आदित्य, सुकाउनमा अग्नि एवं पोषण गर्नमा चन्द्र र सूर्य दुबै हुनुहुन्छ । दुष्ट असुरहरूलाई दुःखित र दूषित बनाउनेवाला, सेवकहरूलाई संतुष्टि प्रदान गर्नेवाला एवं याचनारूपी मलिनतालाई विनाश गर्नेवाला हनुमानजी तपाईँ मोदकदाता पनि हुनुहुन्छ । तुलसीदासका स्वामी (गुरु) हनुमानजी तपाईं तीनै लोकमा दुःखीहरूलाई दुःखबाट किंवा सङ्कटबाट मुक्त गराउनका लागि सधैं दृढ़प्रतिज्ञ हुनुहुन्छ ॥११॥

**सेवक स्योकाई जानि जानकीस मानै कानि,**
**सानुकूल सूलपानि नवै नाथ नाँकको ।**
**देवी देव दानव दयावने ह्वै जोरैं हाथ,**
**बापुरे बराक कहा और राजा राँकको ॥**
**जागत सोवत बैठे बागत बिनोद मोद,**
**ताके जो अनर्थ सो समर्थ एक आँकको ।**
**सब दिन रूरो परै पूरो जहाँ-तहाँ ताहि,**
**जाके है भरोसो हिये हनुमान हाँकको ॥१२॥**

**भावार्थः** भक्तराज हनुमानजीको विशेष सेवालाई बुझेर किंवा जानेर जानकीनाथ श्रीरामले सङ्कोच मान्नुभयो । अर्थात् हनुमानजीले लगाउनुभएको गुनले उहाँ द्रवित हुनुभयो । शूलपाणि भगवान् सदाशिव सदैव स्वानुकूल हुनुहुन्छ। स्वर्गाधिपति इन्द्र आदि देवी-देवता, दैत्य-दानव सबै दयाका पात्र बनेर हाथ जोड्दछन् । फेरि अरू बिचरा दीनदुःखी राजा के नै चीज हुन् र ! जाग्दा, सुत्दा, बस्दा, डुल्दा र क्रीड़ा गर्दा र आनन्दमा मग्न रहँदा पनि पवनपुत्र हनुमानजीका सेवकलाई अनिष्ट गर्ने सामर्थ्य कसैमा पनि छैन । जसको हृदयमा अञ्जनीकुमार हनुमानजीको हाँकमा भरोसा छ , विश्वास छ । त्यस्ता हनुमद्भक्तका सबै दिनहरू जेजस्तो अवस्था भएपनि उत्तम रीतिले चल्दछन् किंवा पूर्ण हुन्छन् ॥१२॥

**सानुग सगौरि सानुकूल सूलपानि ताहि,**
**लोकपाल सकल लखन राम जानकी ।**
**लोक परलोकको बिसोक सो तिलोक ताहि,**
**तुलसी तमाइ कहा काहू बीर आनकी ॥**
**केसरीकिसोर बन्दीछोरके नेवाजे सब,**
**कीरति बिमल कपि करुना निधानकी ।**
**बालक-ज्यों पालिहैं कृपालु मुनि सिद्धताको,**
**जाके हिये हुलसति हाँक हनुमानकी ॥१३॥**

**भावार्थः** जसको हृदयमा हनुमानजीको हाँक उल्लसित हुन्छ तिनीहरूमाथि आफ्ना सेवक तथा पार्वतीजीसहित भगवान् शंकर, समस्त लोकपाल, मर्यादा पुरुषोत्तम श्रीराम, जगज्जननी माता जानकी र लक्ष्मणजी प्रसन्न रहनुहुन्छ । तुलसीदासजी भन्नुहुन्छ - अझ लोक र परलोकमा शोकरहित भएका त्यस्ता प्राणीहरूलाई तीनै लोकमा कुनै योद्धाको आश्रित हुनुपर्ने कुनै लालसा किंवा आवश्यकता हुन्छ ? यदि दयानिधान केसरीनन्दन निर्मल कीर्तिवाला हनुमानजी प्रसन्न हुनुभयो भने सम्पूर्ण सिद्ध मुनिहरू त्यस मनुष्यप्रति दयालु भएर बालकलाई समान पालन गर्नुहुन्छ । यस्ता करुणानिधान कपीश्वरको कीर्ति अत्यन्त निर्मल छ ॥१३॥

**करुनानिधान, बलबुद्धिके निधान मोद-**
**महिमानिधान, गुन-ज्ञान के निधान हौ ।**
**बामदेव-रूप भूप रामके सनेही, नाम**
**लेत-देत अर्थ धर्म काम निरबान हौ ॥**
**आपने प्रभाव सीतारामके सुभाव सील,**
**लोक-बेद-बिधिके बिदूष हनुमान हौ ।**
**मनकी बचनकी करमकी तिहूँ प्रकार,**
**तुलसी तिहारो तुम साहेब सुजान हौ ॥१४॥**

**भावार्थः** हे अञ्जनीकुमार हनुमानजी ! तपाईं दयाको सागर किंवा स्थान, बल र बुद्धिको धाम, आनन्द र महिमाको मन्दिर अनि गुण

र ज्ञानको निकेतन हुनुहुन्छ । तपाईं महाराज रामचन्द्रजीको स्नेही एवं शंकरजीको दिव्यस्वरूप हुनुहुन्छ । हे हनुमानजी ! तपाईंको नाम लिनाले मात्र पनि चारै पुरुषार्थ धर्म, अर्थ, काम र मोक्षको प्राप्ति हुन्छ । हे हनुमानजी ! तपाईं आफ्नै ज्ञानशक्तिले श्रीरघुनाथजीको शील-स्वभाव, लोक-रीति अनि वेद-विधिको पण्डित हुनुहुन्छ । मन, वचन र कर्म तीनै प्रकारले तुलसी तपाईंको भक्त किंवा दास हो । हे हनुमानजी ! तपाईं चतुर स्वामी पनि हुनुहुन्छ । अर्थात् तपाईं भित्र-बाहिर सबैलाई जान्नुहुन्छ । ॥१४॥

**मनको अगम, तन सुगम किये कपीस,**
**काज महाराजके समाज साज साजे हैं ।**
**देव-बंदीछोर रनरोर केसरीकिसोर,**
**जुग-जुग जग तेरे बिरद बिराजे हैं ।**
**बीर बरजोर, घटि जोर तुलसीकी ओर,**
**सुनि सकुचाने साधु, खलगन गाजे हैं ।**
**बिगरी सँवार अंजनीकुमार कीजे मोहिं,**
**जैसे होत आये हनुमानके निवाजे हैं ॥१५॥**

**भावार्थः** हे कपिराज ! महाराज रामचन्द्रजीको कार्य गर्नका लागि सारा साज-समाज मिलेर पनि जुन काम गर्न मनलाई पनि दुर्गम थियो त्यो काम आफ्नो शरीरद्वारा गरेर सुलभ गरिदिनु भयो । हे केशरीकिशोर ! तपाईं देवताहरूलाई बन्दीगृहबाट मुक्त गराउने-वाला र संग्राम भूमिमा कोलाहल मच्चाउनेवाला हुनुहुन्छ । तपाईंको नाम र कीर्ति युगयुगदेखि संसारमा विराजित किंवा सुप्रसिद्ध छ । हे वीरयोद्धा हनुमानजी ! तपाईंको बलशक्ति तुलसी दासका लागि किन कम भयो ? जसलाई सुनेर साधु समाज दुःखी अप्रसन्न अनि दुष्ट असुरगण किन प्रसन्न भइरहेका छन् ? हे हनुमानजी ! मेरा बिग्रेभत्केका काम त्यसरी नै सुधार गरिदिनुहोस् जसरी तपाईं प्रसन्न हुँदा निरन्तर सुधार हुँदै आएका छन् ॥१५॥

**सवैया**

**जानसिरोमनि हौ हनुमान सदा**
**जनके मन बास तिहारो ॥**
**ढ़ारो बिगारो मैं काको कहा केहि**
**कारन खीझत हौं तो तिहारो ॥**
**साहेब सेवक नाते तो हातो कियो**
**सो तहाँ तुलसीको न चारो ।**
**दोष सुनाये तें आगेहुँको होशियार**
**ह्वैं हों मन तौ हिय हारो ॥१६॥**

**भावार्थः** हे केशरीनन्दन हनुमानजी ! तपाईं ज्ञानीहरूमा शिरोमणि/अग्रणी हुनुहुन्छ । तपाईं भक्तजन किंवा सेवकहरूको मनमा सदासर्वदा निवास गर्नुहुन्छ । म त कसैको के नै बिगार गर्न किंवा भत्काउन सक्छु र ? हे स्वामी ! हे दयानिधान ! तपाईंले मलाई सेवकको नाताले च्युत/अपराधी साबित गरिदिनु भयो । यसमा तपाईंको दास यो तुलसीको कुनै हात या वशमा छैन । यद्यपि मेरो मन वा हृदय सबै प्रकारले हारिसकेको छ तथापि मेरा के के अपराधहरू छन् ? मलाई सुनाइदिनुहोस् । हे कृपानिधान ! अगाडिका लागि म विशेष होशियार बन्न सकूँ ॥१६॥

**तेरे थपे उथपै न महेस,**
**थपै थिरको कपि जे घर घाले ।**
**तेरे निवाजे गरीबनिवाज**
**बिराजत बैरिनके उर साले ॥**
**संकट सोच सबै तुलसी लिये**
**नाम फटै मकरीके से जाले ।**
**बूढ़ भये, बलि, मेरिहि बार,**
**कि हारि परे बहुतै नत पाले ॥१७॥**

**भावार्थ**ः हे वानरराज हनुमानजी ! तपाईंले बनाएको किंवा बसाएको आधार वा घरलाई भगवान् शंकरजीले पनि बिगार्न सक्नुहुन्न । जुन घरलाई तपाईंले स्वयं नष्ट गरिदिनु भएको छ त्यसलाई कसले

बनाउन किंवा बसाउन सक्छ र ? हे गरीबनिवाज/कृपानिधान ! तपाईं जुन भक्त उपर प्रसन्न हुनुहुन्छ ती भक्तहरूको हृदयमा त तपाईं शत्रुहरूको पीड़ारूप भएर विराजमान हुनुहुन्छ । तुलसीदासजी भन्नुहुन्छ - तपाईंको नाम लिनाले सम्पूर्ण सङ्कट अनि चिन्ता माकुराको जालोसमान फाटेर नष्ट हुन्छ । हे बलिहारी ! के तपाईं मेरो नै पालामा बूढ़ो हुनुभयो वा धेरै दीनदु:खीहरूको पालन गर्दागर्दै अब थाक्नु भयो ? मेरा दु:ख र सङ्कटहरू दूर गर्नमा किन ढिलाइ गरिरहनु भएको छ ॥१७॥

**सिंधु तरे, बड़े बीर दले खल,**
**जारे हैं लंकसे बंक मवा से ।**
**तैं रनि-केहरि केहरिके बिदले**
**अरि-कुंजर छैल छवा से ॥**
**तोसों समत्थ सुसाहेब सेई**
**सहै तुलसी दुख दोष दवासे ।**
**बानर बाज बढ़े खल-खेचर,**
**लीजत क्यों न लपेटि लवासे ॥१८॥**

**भावार्थः** तपाईंले समुद्र पारगरी लङ्का पुगेर भयङ्कर ठूला दुष्ट राक्षसहरूको विनाश गर्नुभयो । लङ्काजस्तो विकट र सुरक्षित गढ़लाई जलाउनु भयो । हे संग्रामरूपी वनसिंह ! राक्षस शत्रु हाथीका बच्चासमान थिए । तपाईंले तिनलाई सिंहसमान भएर नष्ट गरिदिनु भयो । हे पवनकुमार ! तपाईंजस्तो समर्थवान् र असल स्वामीको सेवा गर्दागर्दै पनि यो तुलसीले दोष र दु:खको अग्निलाई सहन गरिरहनु परेको छ । यो बडो आश्चर्यको कुरा हो । हे वानररूपी बाज ! यहाँ दुष्टजनरूपी धेरै पक्षीहरू बढिरहेका छन् । तिनलाई बटेर/बटाईलाई झैं किन लपेट्नु हुन्न ? ॥१८॥

**अच्छ-विमर्दन कानन-भानि**
**दसानन आनन भा न निहारो ।**
**बारिदनाद अकंपन कुंभकरन्न-**
**से कुंजर केहरि-बारो ॥**
**राम-प्रताप-हुतासन, कच्छ,**
**बिपच्छ, समीर समीरदुलारो ।**

**पापतें सापतें ताप तिहूँतें सदा**
**तुलसी कहँ सो रखवारो ॥१९॥**

**भावार्थः** हे अक्षयकुमारलाई मार्नेवाला हनुमानजी ! तपाईंले अशोक-वाटिकालाई विध्वंस गर्नुभयो । त्रिलोकविजयी रावणजस्तो महाप्रतापी योद्धाको मुखको तेजलाई पनि वास्तासम्म गर्नुभएन । अर्थात् उसको कुनै परवाह तक गर्नुभएन । हनुमानजी ! तपाईं मेघनाद, अकम्पन र कुम्भकर्ण समान हात्तीहरूको मदलाई चूर्ण गर्नमा किशोरावस्थाका सिंह हुनुहुन्छ । विपक्षरूप तृण/खरपरालको थुप्राको लागि भगवान् श्रीरामको प्रताप अग्नि-तुल्य छ भने पवनकुमार तपाईं उक्त अग्नि प्रज्वलित गर्नका लागि पवनरूप हुनुहुन्छ । हे महाबली पवननन्दन ! तपाईं नै तुलसीदासलाई सर्वदा पाप, शाप र संताप तीनैबाट बचाउनेवाला हुनुहुन्छ ॥१९॥

## घनाक्षरी

**जानत जहान हनुमानको निवाज्यौ जन,**
**मन अनुमानि बलि, बोल न बिसारिये ।**
**सेवा-जोग तुलसी कबहुँ कहा चूक परी,**
**साहेब सुभाव कपि साहिबी सँभारिये ॥**
**अपराधी जानि कीजै सासति सहस भाँति,**
**मोदक मरै जो ताहि माहुर न मारिये ।**
**साहसी समीरके दुलारे रघुबीरजूके,**
**बाँह पीर महाबीर बेगि ही निवारिये ॥२०॥**

**भावार्थः** हे केसरीनन्दन हनुमानजी ! म बलिहारी समर्पित हुन्छु । आफ्नो प्रतिज्ञालाई नबिर्सनुहोस् जसलाई संसार जान्दछ । हे रामभक्त हनुमानजी ! मनमा केही विचार गर्नुहोस् । तपाईंका कृपापात्र भक्तजन सदैव बाधारहित हुन्छन् । सदैव प्रसन्न रहन्छन् । हे स्वामी कपिराज ! तुलसी कहिल्यै सेवाको योग्य थियो ? मबाट के चूक/गल्ती भयो ? आफ्नो साहिबी प्रभुत्वलाई सम्हाल्नुहोस् । मलाई अपराधी सम्झनुहुन्छ भने अझै हजारौं प्रकारका दुर्दशा गराइदिनुहोस् । अर्थात् अझै दुःख

दिनुहोस् किन्तु जुन लड्डु दिएर मर्छ उसलाई विषले नमार्नुहोस् । हे महाबली, साहसी, पवनका प्रियपुत्र ! रघुनाथजीका प्यारा भक्त ! मेरा यी हातहरूको असहनीय पीड़ालाई शीघ्रातिशीघ्र दूर गरिदिनुहोस् ॥२०॥

**बालक बिलोकि, बलि बारेतें आपनो कियो,**
**दीनबंधु दया कीन्हीं निरुपाधि न्यारिये ।**
**रावरो भरोसो तुलसीके, रावरोई बल,**
**आस रावरीयै दास रावरो बिचारिये ॥**
**बड़ो बिकराल कलि, काको न बिहाल कियो,**
**माथे पगु बलिको, निहारि सो निवारिये ।**
**केसरीकिसोर, रनरोर, बरजोर बीर,**
**बाँहुपीर राहुमातु ज्यौं पछारि मारिये ॥२१॥**

**भावार्थः** हे दीनबन्धु ! म बलि जान्छु ...। तपाईंले मलाई बालक देखेर आफ्नो वात्सल्यभावले स्वीकार गर्नुभयो र ममाथि मायारहित अनुपम दया गर्नुभयो । सोच्नुहोस् त तुलसीदास तपाईंकै दास हो । यसलाई तपाईंकै भरोसा, तपाईंकै बल र तपाईंकै आशा छ । अत्यन्त भयानक कलिकालले कसलाई बेचैनी बनाएको छैन र ? त्यस बलवान्का पाउ मेरो शिरमा पनि देखेर उसलाई हटाइदिनुहोस् । हे केसरीकिशोर अद्वितीय वीर ! तपाईं युद्धमा कोलाहल उत्पन्न गर्ने वाला हुनुहुन्छ । राहुकी माता सिंहिकासमान बाहुको पीड़ालाई पछारेर मारिदिनुहोस् ॥२१॥

**उथपे थपनथिर थपे उथपनहार,**
**केसरीकुमार बल आपनो सँभारिये ।**
**रामके गुलामनिको कामतरु रामदूत,**
**मोसे दीन दूबरेको तकिया तिहारिये ॥**
**साहेब समर्थ तोसों तुलसीके माथे पर,**
**सोऊ अपराध बिनु बीर, बाँधि मारिये ।**
**पोखरी बिसाल बाँहु, बलि, बारिचर पीर,**
**मकरी ज्यौं पकरिकै बदन बिदारिये ॥२२॥**

**भावार्थः** हे केसरीकुमार ! विस्थापित किंवा पराजित भएका

सुग्रीव र विभीषणलाई स्थापित गराउनेवाला अनि स्थापित किंवा विजयी रावण आदिलाई विस्थापित गराउनेवाला तपाईं नै हुनुहुन्छ । हे हनुमानजी ! तपाईंले उक्त बलको स्मरण त गर्नुहोस् । हे रामदूत ! रामचन्द्रका सेवकहरूको लागि तपाईं कल्पवृक्ष हुनुहुन्छ । मजस्ता दीनदुःखी किंवा दुर्बलहरूका लागि तपाईं नै एक सहारा हुनुहुन्छ । हे वीर ! तपाईं समान समर्थवान् स्वामी विद्यमान हुँदाहुँदै पनि विना अपराध तुलसीदासलाई शिरमा बाँधेर मार्न खोजिएको छ । मेरो भुजा विशाल पोखरीको समान छ र यो पीड़ा पोखरीमा जलचरसमान छ । हे केसरीनन्दन हनुमानजी ! तपाईं मकरसमान यस जलचरलाईँ समातेर त्यसको मुख फाडिदिनुहोस्, त्यसलाई नष्ट गरिदिनुहोस् ॥२२॥

**रामको सनेह, राम साहस लखन सिय,**
**रामकी भगति, सोच द संकट निवारिये ।**
**मुद-मरकट रोग-बारिनिधि हेरि हारे,**
**जीव-जामवंतको भरोसो तेरो भारिये ॥**
**कूदिये कृपाल तुलसी सुप्रेम-पब्बयतें,**
**सुथल सुबेल भालु बैठिकै बिचारिये ।**
**महाबीर बाँकुरे बराकी बाँहपीर क्यों न,**
**लंकिनी ज्यों लातघात ही मरोरि मारिये॥२३॥**

**भावार्थः** हे महावीर महाबली कपिराज ! तपाईंमा श्रीरामजीको स्नेह, रामजीको भक्ति, श्रीराम, लक्ष्मण र जानकीजीको असीम कृपा छ । त्यसैले तपाईंमा दृढ़तापूर्वक कठिनाइको सामना गर्नसक्ने हिम्मत किंवा साहस छ । अतः मेरो शोक र सङ्कटलाई दूर गरिदिनुहोस् । आनन्दरूपी वानर रोगरूपी अपार समुद्रलाई देखेर मनले हरेस खाएको छ । जीवरूपी जाम्बवन्तलाई तपाईंको ठूलो भरोसा छ । हे कृपालु ! तुलसीदासको सुन्दर प्रेमरूपी पर्वतबाट कुद्नुहोस् । सर्वोत्तम स्थान हृदयरूपी सुमेरुपर्वतमा बसेका जीवरूपी जाम्बवन्तजी सोच्दै प्रतीक्षा गर्दै हुनुहुन्छ । हे महाबली बाँके योद्धा हनुमानजी ! मेरो शरीर/बाहुमा पसेकी पीड़ारूपिणी लङ्किनीलाई लातको प्रहारले कुल्चेर मरोड़ेर किन मार्नुहुन्न किन नष्ट गर्नुहुन्न ॥२३॥

**लोक-परलोकहुँ तिलोक न बिलोकियत,**
**तोसे समरथ चष चारिहूँ निहारिये ।**
**कर्म, काल,लोकपाल, अग-जग जीवजाल,**
**नाथ हाथ सब निज महिमा बिचारिये ॥**
**खास दास रावरो, निवास तेरो तासु उर,**
**तुलसी सो देव दुखी देखियत भारिये ।**
**बात तरुमूल बाँहुसूल कपिकच्छु-बेलि,**
**उपजी सकेलि कपिकेलि ही उखारिये ॥२४॥**

**भावार्थः** लोक, परलोक किंवा तीनै लोकमा म चारवटै नेत्रले देखिरहेको छु । तपाईंका समान योग्य अरू कोही देखिदैंनन् । हे नाथ ! कर्म, काल, लोकपाल तथा सम्पूर्ण स्थावरजङ्गम जीवसमूह तपाईंकै हातमा छन् । आफ्नो महत्त्व र महिमालाई विचार गर्नुहोस् । हे देव ! तुलसीदास तपाईंको निजी सेवक हो । उसका हृदयमा तपाईंको निवास छ तर ऊ वातव्याधिजनित पीडाले आक्रान्त किंवा अत्यन्त दुःखी देखिएको छ । उसका लागि बाहु/हातको पीड़ा कपिकच्छु (काउसो) को लतासमान भएको छ । त्यसैले हे महावीर हनुमानजी ! कपिकच्छु उत्पन्न उक्त लताको मूल किंवा जरो बटुलेर कपिखेलले उखेलिदिनुहोस् नाश गरिदिनुहोस् ॥२४॥

**करम-कराल-कंस भूमिपालके भरोसे,**
**बकी बकभगिनी काहूतें कहा डरैगी ।**
**बड़ी बिकराल बालघातिनी न जात कहि,**
**बाँहुबल बालक छबीले छोटे छरैगी ॥**
**आई है बनाइ बेष आप ही बिचारि देख,**
**पाप जाय सबको गुनीके पाले परैगी ।**
**पूतना पिसाचिनी ज्यौं कपिकान्ह तुलसीकी,**
**बाँहपीर महाबीर तेरे मारे मरैगी ॥२५॥**

**भावार्थः** कर्मरूपी भयङ्कर भूमिपाल कंसासुरको भरोसामा उन्मत्त भएकी बकासुरकी बहिनी बकी पूतना राक्षसी कसैसँग डराउँछे क्या ? बालकहरूलाई मार्नमा बड़ी भयावह पूतनाको कपटलीला अरू

कसैले जान्दैन। उसले आफ्नो बाहुबलले स-साना मनोहर शिशुहरूलाई छल गर्नेछ। तपाईं आँफै विचार गरेर हेर्नुहोस्। ऊ सुन्दर रूप बनाएर आएकी छे। यदि तपाईं समान गुणीको हात/फेला परी भने मात्र सबैका पाप निवारण हुन्छ। हे महाबली कपिराज ! तुलसीको बाहुको पाप/पीड़ा पूतना पिशाचिनीको समान छ। तपाईं बालकृष्णरूप हुनुहुन्छ। अतः तपाईंले मारेर नै पूतना पिशाचिनीको विनाश हुनेछ ॥२५॥

**भालकी कि कालकी कि रोषकी त्रिदोषकी है,**
**बेदन बिषम पाप-ताप छल छाँहकी।**
**करमन कूटकी कि जन्त्रमन्त्र बूटकी,**
**पराहि जाहि पापिनी मलीन मनमाँहकी ॥**
**पैहहि सजाय नत कहत बजाय तोहि,**
**बाबरी न होहि बानि जानि कपिनाँहकी।**
**आन हनुमानकी दुहाई बलवानकी,**
**सपथ महाबीरकी जो रहै पीर बाँहकी ॥२६॥**

**भावार्थः** यो वातव्याधिजनित असह्य पीड़ा मेरो भाग्यमा लेखेको हो या समय, क्रोध किंवा त्रिदोषको हो या मेरै भयङ्कर पापको परिणाम हो या दुःख किंवा धोकाको छाया हो या मारणादि प्रयोग अथवा यन्त्र-मन्त्र रूपी वृक्षको फल हो। अरे मनकी मैलो पापिनी पूतना ! मबाट टाढा भागिहाल नत्र म डन्का पिटेर सबैलाई भनिदिन्छु कि कपिराजको स्वभाव जानेर तँ पागल हुन सक्छेस्। यो बाहु/हातको पीड़ा रहिरह्यो भने त म तुलसीदास महाबीर हनुमानजीको दुहाइ र सौगन्ध (वाचा) गर्दछु। अब त्यो दुःख किमार्थ रहन सक्ने छैन ॥२६॥

**सिंहिका सँहारि बल, सुरसा सुधारि छल,**
**लंकिनी पछारि मारि बाटिका उजारी है।**
**लंक परजारि मकरी बिदारि बारबार,**
**जातुधान धारि धूरिधानी करि डारी है ॥**
**तोरि जमकातरि मंदोदरी कढ़ोरि आनी,**
**रावनकी रानी मेघनाद महँतारी है।**
**भीर बाँहपीरकी निपट राखी महाबीर,**
**कौनके सकोच तुलसीके सोच भारी है ॥२७॥**

**भावार्थः** हे महाबली पवनकुमार हनुमानजी ! तपाईंले सिंहिकाको बललाई संहार गरेर अनि सुरसाको छललाई सुधारेर हराउनु भयो। लङ्किनीलाई पछारेर मार्नुभयो। अशोक-वाटिकालाई उजाड़/ध्वस्त पार्नुभयो । लङ्कापुरीलाई जलाएर विनाश गर्नुभयो । मकरीलाई विदीर्ण गरेर/फाडेर बारबार राक्षसहरूको सेनाको विनास गर्नुभयो । यमराजको खड्ग अर्थात् पर्दा फाड़ेर मेघनादकी माता र रावणकी पटरानी मन्दोदरीलाई राजमहलबाट बाहिर निकालेर ल्याउनुभयो । हे महाबली कपिराज ! तुलसीदास बड़ो चिन्ता/सोचमा परेको छ। कसको सङ्कोचमा परेर तपाईंले केवल मेरो बाहुको पीड़ाको भयलाई किन त्यसै छाडिदिनुभएको छ ॥२७॥

**तेरो बालिकेलि बीर सुनि सहमत धीर,**
**भूलत सरीरसुधि सक्र-रबि-राहुकी ।**
**तेरी बाँह बसत बिसोक लोकपाल सब,**
**तेरो नाम लेत रहै आरति न काहुकी ॥**
**साम दान भेद बिधि बेदहू लबेद सिधि,**
**हाथ कपिनाथहीके चोटी चोर साहुकी ।**
**आलस अनख परिहासकै सिखावन है,**
**एते दिन रही पीर तुलसीके बाहुकी ॥२८॥**

**भावार्थः** हे वीर कपिनाथ ! तपाईंको बालककालका खेल/क्रीडा/लीला सुनेर धीरजवान् व्यक्ति पनि भयभीत हुन्छन् । इन्द्र, सूर्य तथा राहु आफ्नो शरीरको सुधबुध नै हराउँछन् । तपाईंको बाहुबलका कारण सम्पूर्ण लोकपाल शोकरहित भएर बसेका हुन्छन् । तपाईंको नाम लिनाले कसैको पनि दुःख-पीडा रहँदैन । तपाईं साम, दाम, दण्ड र भेद-नीतिको विधान तथा वेद एवं लवेद (तर्क) बाट पनि सिद्ध हुनुहुन्छ । हे कपिनाथ हनुमानजी ! चोर अनि साहु दुबैको टुप्पी तपाईंकै हातमा छ । यतिका दिनदेखि तुलसीदासको बाहुको जुन पीड़ा विद्यमान छ। त्यो पीडा के तपाईंको आलस्य हो अथवा क्रोध, परिहास या शिक्षा हो ? ॥२८॥

**टूकनिको घर-घर डोलत कँगाल बोलि,**
**बाल ज्यों कृपाल नतपाल पालि पोसो है ।**

**कीन्ही है सँभार सार अंजनीकुमार बीर,**
**आपनो बिसारिहैं न मेरेहू भरोसो है ॥**
**इतनो परेखो सब भाँति समरथ आजु,**
**कपिराज साँची कहौं को तिलोक तोसो है ।**
**सासति सहत दास कीजे पेखि परिहास,**
**चीरीको मरन खेल बालकनिको सो है ॥२९॥**

**भावार्थः** हे गरीबपालक गर्नेवाला कृपानिधान ! कुनैबेला तुलसी एक टुक्रा रोटीको लागि दरिद्रतावश घरघरमा डुल्दैफिर्दै थियो । तपाईंले बोलाएर बालकका समान पालनपोषण गर्नुभएको हो । हे वीर अञ्जनीकुमार ! मुख्यतः तपाईंले नै अनाथ तुलसीको रक्षा गर्नुभएको हो । तपाईंले आफ्ना भक्तजनलाई कसै पनि भुल्नुहुनेछैन । यसमा मलाई पनि पूर्ण भरोसा छ । हे कपिराज ! आज तपाईं सबै प्रकारले समर्थ हुनुहुन्छ । म सत्य भन्दैछु । तीनै लोकमा तपाईंका समान अर्को कुन छ र ? किन्तु मलाई यति धेरै पछुतो भएको छ कि यो दासले दुर्दशा सहिरहेको छ । बालकहरूको खेलवाड़ भएसमान चराचुरुङ्गीको मृत्यु भइरहेको छ । यस्तो अवस्थामा पनि तपाईंले किन तमाशा हेरिरहनु हुन्छ ॥२९॥

**आपने ही पापतें त्रिपाततें कि सापतें,**
**बढ़ी है बाँहबेदन कही न सहि जाति है ।**
**औषध अनेक जन्त्र-मन्त्र-टोटकादि किये,**
**बादि भये देवता मनाये अधिकाति है ॥**
**करतार, भरतार, हरतार, कर्म, काल,**
**को है जगजाल जो न मानत इताति है ।**
**चेरो तेरो तुलसी तू मेरो कह्यो राम दूत,**
**ढील तेरी बीर मोहि पीरतें पिराति है ॥३०॥**

**भावार्थः** मेरो आफ्नै सञ्चित पापकर्म किंवा प्रारब्ध, त्रिताप (आध्यात्मिक, आधिभौतिक र आधिदैविक ताप) वा शापका कारण मेरो बाहु/हातको पीड़ा झनझन बल्झिरहेको छ । त्यो पीडा म न भन्न सक्छु , न सहन नै सक्छु । अनेक औषधि, यन्त्र-मन्त्र, टोटकादि गरें । देवताहरूलाई मनाउने प्रयास गरें परन्तु सबै प्रयास व्यर्थ भयो । बाहुपीड़ा

बढ़िरहेको छ । ब्रह्मा, विष्णु, महेश, कर्म, काल र संसारका समूह-जाल कुन यस्तो छ जसले तपाईंको आज्ञालाई उल्लङ्घन गर्न सकोस् । हे रामदूत हनुमानजी ! तुलसी तपाईंको दास हो र तपाईंले पनि यस दासलाई आफ्नो सेवक भन्नुभएको हो । हे वीर ! तपाईंको यो ढिलासुस्तीले मलाई बाहुपीडाले भन्दा पनि अधिक पीडा दिइरहेको छ ॥३०॥

**दूत रामरायको, सपूत पूत बायको,**
**समत्व हाथ पायको सहाय असहायको ।**
**बाँकी बिरदावली बिदित बेद गाइयत,**
**रावन सो भट भयो मुठिकाके घायको ॥**
**एते बड़े साहेब समर्थको निवाजो आज,**
**सीदत सुसेवक बचन मन कायको ।**
**थोरी बाँहपीरकी बड़ी गलानि तुलसीको,**
**कौन पाप कोप, लोप प्रकट प्रभायको ॥३१॥**

**भावार्थः** हे कपिराज हनुमानजी ! तपाईं मर्यादा पुरुषोत्तम श्रीरामका अनन्यभक्त, पवनदेवका सत्पुत्र, हातपाउका समर्थ र निराश्रितका सहायक हुनुहुन्छ । तपाईंको सुन्दर यश/कीर्तिको कथा विश्वविख्यात छ । वेदले पनि तपाईंको यशगान गरेका छन् । रावणजस्तो त्रिलोक-विजयी योद्धा तपाईंको मुड्कीको प्रहारले घायल भएको थियो । यति महान् योग्य स्वामीको अनुग्रह हुँदाहुँदै पनि तपाईंको श्रेष्ठ सेवक आज तन-मन-वचनले दुःख पाइरहेको छ । तुलसीलाई यो बाहुपीड़ाको बड़ो ग्लानि भइरहेको छ । मेरो कुन पापका कारण वा क्रोधबाट तपाईंको प्रत्यक्ष प्रभाव लुप्त भएको छ ॥३१॥

**देवी देव दनुज मनुज मुनि सिद्ध नाग,**
**छोटे बड़े जीव जेते चेतन अचेत हैं ।**
**पूतना पिसाची जातुधानी जातुधान बाम,**
**रामदूतकी रजाइ माथे मानि लेत हैं ॥**
**घोर जन्त्र मन्त्र कूट कपट कुरोग जोग,**
**हनूमान आन सुनि छाड़त निकेत हैं ।**

**क्रोध कीजे कर्मको प्रबोध कीजे तुलसीको,**
**सोध कीजे तिनको जो दोष दुख देत हैं ॥३२॥**

**भावार्थः** देवी, देवता, दैत्य, मनुष्य, मुनि, सिद्ध र नाग आदि सानाठूला जति जड़-चेतन जीवहरू छन् तथा पूतना-पिशाचिनी, राक्षसी-राक्षस जति कुटिल प्राणीहरू छन् ती सबै रामदूत पवनकुमारको आज्ञा शिरोधार्य गरेर मान्दछन्। भीषण यन्त्र-मन्त्र, धोखाधारी, छलकपट र दुष्ट रोगहरूको आक्रमण पनि हनुमानजीको दुहाइ सुनेर स्थान छोड़िदिन्छन् । मेरो दोषपूर्ण कर्ममा क्रोध गर्नुहोस् । तुलसीलाई प्रबोध/सुखावन दिनुहोस् । हे हनुमानजी जुनजुन दोषहरूले हामीलाई दुःख दिइरहेका छन् ती दोषहरूलाई सुधार वा नाश गरिदिनुहोस् ॥३२॥

**तेरे बल बानर जिताये रन रावनसों,**
**तेरे घाले जातुधान भये घर-घरके ।**
**तेरे बल रामराज किये सब सुरकाज,**
**सकल समाज साज साजे रघुबरके ॥**
**तेरो गुनगान सुनि गीरबान पुलकत,**
**सजल बिलोचन बिरंचि हरि हरके ।**
**तुलसीके माथेपर हाथ फेरो कीसनाथ,**
**देखिये न दास दुखी तोसे कनिगरके ॥३३॥**

**भावार्थः** हे पवनपुत्र ! तपाईंको बलले युद्धमा वानरहरूलाई रावण आदिबाट जिताउनुभयो वा रक्षा गर्नुभयो । तपाईंले नै विनाश गरेकाले राक्षसहरू घरघर किंवा तीन न तेरहका भए। तपाईंकै बलबाट राजा रामचन्द्रजीले देवताहरूको सबै काम पूरा गर्नुभयो । तपाईंले रघुनाथजीको समाजलाई सम्पूर्ण साज-सज्जाले सजाउनुभयो। हनुमानजी ! तपाईंका गुणहरूको यशगान सुनेर देवता रोमाञ्चित हुन्छन् । ब्रह्मा, विष्णु, महेशको आँखामा जल भरिएर आउँछ । हे स्वामी ! तुलसीको शिरमा हात राखी मर्यादाको लाज राखिदिनुहोस् । हे सकलगुणनिधान तपाईंजस्ताका सेवक कहिल्यै दुःखी देखिएका छैनन् ॥३३॥

**पालो तेरे टूकको परेहू चूक मूकिये न,**
**कूर कौड़ी दूको हौं आपनी ओर हेरिये ।**

**भोरानाथ भोरे ही  सरोष होत थोरे दोष,**
**पोषि  तोषि थापि आपनो न अवडेरिये ॥**
**अबु तू हौं अबुचर,अबु तू हौं डिंभ सो न,**
**बूझिये  बिलंब  अवलंब  मेरे  तेरिये ।**
**बालक बिकल जानि पाहि प्रेम पहिचानि,**
**तुलसीकी बाँहपर लामी लूम फेरिये ॥३४॥**

**भावार्थः** हे कपिराज ! म तपाईंको रोटीका टुक्राबाट पालिएको हुँ । मबाट कुनै गल्ती भए पनि तपाईं मौन नभइदिनुहोस् विन्ती छ । म कुमार्गी दुई कौड़ीको हुँ । परन्तु तपाईं मतर्फ फर्किदिनुहोस् मलाई हेरिदिनुहोस् । हे भोलेनाथ ! तपाईं भोलेपनबाट नै सानोतिनो कुराले नै रुष्ट हुनुहुन्छ । स्वयं सन्तुष्ट भएर मलाई पालन गर्नुहोस् । बसाइ दिनुहोस् । मेरो रक्षा गर्नुहोस् । आफ्नो सेवक सम्झेर दुर्दशाबाट मुक्त गरिदिनुहोस् । तपाईं जल हुनुहुन्छ भने म तुच्छ माछो हुँ । तपाईं माता हुनुहुन्छ भने म तुच्छ बालक हुँ । अब विलम्ब नगर्नुहोस् । मेरो एकमात्र सहारा तपाईं नै हो । बच्चालाई व्याकुल जानेर प्रेमको पहिचान गरेर रक्षा गर्नुहोस् । तुलसीको पीडायुक्त हातमा आफ्नो लामो पुच्छर फैलाएर मेरो पीड़ा निर्मूल गरिदिनुहोस् ॥३४॥

**घेरि लियो रोगनि,कुजोगनि,कुलोगनि ज्यौं,**
**बासर  जलद  घन  घटा  धुकि धाई है ।**
**बरसत  बारि  पीर  जारिये  जवासे जस,**
**रोष  बिनु  दोष  धूम-मूल  मलिनाई है ॥**
**करुनानिधान  हनुमान  महाबलवान,**
**हेरि हँसि हाँकि फूँकि  फौजैं ते उड़ाई है ।**
**खाये  हुतो  तुलसी  कुरोग  राढ़ राकसनि,**
**केसरीकिसोर  राखे  बीर  बरिआई है ॥३५॥**

**भावार्थः** हे पवननन्दन हनुमानजी ! रोग, कुयोग र दुष्ट/दुर्जनहरूले अकस्मात् मलाई यसरी घेरेका/झम्टेका छन् जसरी दिनलाई बादलको घना समूहले झम्टेर आकाशमा दौडन्छ अनि ढाक्छ । पीड़ारूपी जल बर्साएर यिनीहरूले क्रोध गरेर बिना अपराध यशरूपी

जवासेलाई अग्निसमान झुलसाएर मुर्च्छित गरेका छन् । हे दयानिधान हनुमानजी ! तपाईं हाँसेर हेर्नुहोस् र ललकारेर विपक्षको सेनालाई आफ्नो फूँक/श्वासले उड़ाइदिनुहोस् । हे केसरीकिशोर हनुमानजी ! तुलसीदासलाई कुरोगरूपी निर्दयी राक्षसले खाइसकेको छ । आफ्नो जोडबल/शक्तिले मेरो रक्षा गर्नुहोस् ॥३५॥

**सवैया**

**रामगुलाम तुही हनुमान**
**गोसाँइ सुसाँइ सदा अनुकूलो ।**
**पाल्यो हौं बाल ज्यों आखर दू**
**पितु मातु सों मंगल मोद समूलो ॥**
**बाँहकी बेदन बाँहपगार**
**पुकारत आरत आनँद भूलो ।**
**श्रीरघुबीर निवारिये पीर**
**रहौं दरबार परो लटि लूलो ॥३६॥**

**भावार्थः** - हे गोस्वामी हनुमानजी ! तपाईं सेवकका लागि श्रेष्ठ स्वामी हुनुहुन्छ । तपाईं सदैव राजा श्रीरामजीका सेवकहरूको पक्षमा रहनुहुन्छ। आनन्द-मङ्गलको मूल दुई अक्षर रामरामले मातापिताका समान मेरो पालनपोषण गरेको हो। हे बाहुपगार (भुजाहरूको आश्रय दिनेवाला) हनुमानजी ! हातको पीड़ाले पीडित म सारा आनन्द भुलाएर अत्यन्त दुःखी भई आर्त पुकार गरिरहेको छु। हे रघुकुलभूषण श्रीरामका परमभक्त हनुमानजी ! मेरो यो असह्य पीड़ालाई दूर गरिदिनुहोस् । जुन पीडाले अति दुर्बल र पङ्गु भएर पनि म तपाईंको दरबार/शरणमा परिरहुँ ॥३६॥

**घनाक्षरी**

**कालकी करालता करम कठिनाई कीधौं,**
**पापके प्रभावकी सुभाय बाय बावरे ।**
**बेदन कुभाँति सो सही न जाति राति दिन,**
**सोई बाँह गही जो गही समीरडाबरे ॥**
**लायो तरु तुलसी तिहारो सो निहारि बारि,**

**सींचिये मलीन भो तयो है तिहुँ तावरे ।**
**भूतनिकी आपनी परायेकी कृपानिधान,**
**जानियत सबहीकी रीति राम रावरे ॥३७॥**

**भावार्थः** कालको भयानकता हो या कर्मको कठिनता हो । पापको प्रभाव हो या स्वाभाविक बातको उन्मत्तता । हे कपिनाथ ! रातदिन असह्य पीड़ाले मलाई सताएको छ । जुन हातको पीडा सहन नसकेर म पागल- जस्तो भएको छु । कुनै बेला यही हातलाई तपाईंले समाएर डोऱ्यानुभएको थियो । यो तुलसीरूपी वृक्ष तपाईंले नै लगाउनु भएको हो । हे प्रभो ! यो वृक्ष तीनवटै तापको ज्वालाले अहिले झुलसिएर ओइलाउँदै गएको छ । हे सङ्कटमोचन हनुमानजी ! यसतर्फ दयादृष्टि दिएर कृपारूपी जलले सिञ्चन गर्नुहोस् । हे दयानिधान ! राजा रामचन्द्र र महावीर हनुमानजी ! तपाईं सम्पूर्ण भूतप्राणीको आफ्नो र पराइ सबैको रीति जान्नुहुन्छ ॥३७॥

**पाँयपीर पेटपीर बाँहपीर मुँहपीर,**
**जरजर सकल सरीर पीरमई है ।**
**देव भूत पितर करम खल काल ग्रह,**
**मोहिपर दवरि दमानक सी दई है ॥**
**हौं तो बिन मोलके बिकानो बलि बारेही तें,**
**ओट रामनामकी ललाट लिखि लई है ।**
**कुंभज के किंकर बिकल बूढ़े गोखुरनि,**
**हाय रामराय ऐसी हाल कहूँ भई है ॥३८॥**

**भावार्थः** पाउको पीड़ा, पेटको पीड़ा, हातको पीड़ा र मुखको पीड़ाले सारा शरीर पीडामय भएर जीर्ण-शीर्ण भएको छ । देवता, प्रेत, पितर, कर्म, काल र दुष्टग्रह सबैले एकैसाथ ममाथि व्याधिरूपी तोपहरूको वर्षा किंवा आक्रमण गरिरहेछन् । म बलि जान्छु । म त लड़कपन/बालपनले तपाईंको हातमा विनामूल्य बिकिसकेको छु । आफ्नो कपाल/ललाटमा रामनामको आधार लेखिसकेको छु । अहो बडो आश्चर्यको विषय छ । राजा श्रीरामचन्द्रजी ! कहीं कतै यस्तो

दशा पनि भएको छ कि अगस्त्य मुनिका विकल वृद्ध सेवक गाईको पदचिह्न/खुरको डोबको जलमा डुबेका थिए रे ॥३८॥

**बाहुक-सुबाहु नीच लीचर-मरीच मिलि,**
**मुँहपीर-केतुजा कुरोग जातुधान हैं ।**
**रामनाम जपजाग कियो चहों सानुराग,**
**काल कैसे दूत भूत कहा मेरे मान हैं ॥**
**सुमिरे सहाय रामलखन आखर दोऊ,**
**जिनके समूह साके जागत जहान हैं ।**
**तुलसी सँभारि ताड़का-सँहारि भारि भट,**
**बेधे बरगदसे बनाइ बानवान हैं ॥३९॥**

**भावार्थः** हे हनुमानजी ! मलाई यति धेरै पीडा दिनमा बाहुको पीड़ारूप नीच सुबाहु , देहको आशक्तिरूप मारीच राक्षस र ताड़कारूपिणी मुखको पीड़ा एवं अन्यान्य खराब रोगव्याधिरूप राक्षसहरू मिलेका छन् । म रामनामको जपरूपी यज्ञ प्रेमसाथ गर्न चाहन्छु । परन्तु कालदूतका समान यी भूतहरू मेरा अधीनका हुन् र ? कदापि होइनन् । संसारमा जसको बड़ो नामवरी/चर्चा भइरहेको छ । त्यही दुई अक्षर राम स्मरण गर्नाले अवश्य मेरो सहायता गर्नुहुन्छ । हे तुलसीदास ! तँ ताड़काको वध गर्नेवाला महान् योद्धाको स्मरण गर । उनै राम व्याधिरूप राक्षसहरूलाई आफ्नो बाणको निशाना बनाएर बरको फलसमान भेदन गरिदिनुहुन्छ ॥३९॥

**बालपने सूधे मन राम सनमुख भयो,**
**रामनाम लेत माँगि खात टूकटाक हौं ।**
**पर्‍यो लोक-रीतिमें पुनीत प्रीति रामराय,**
**मोह बस बैठो तोरि तरकितराक हौं ॥**
**खोटे-खोटे आचरन आचरत अपनायो,**
**अंजनीकुमार सोध्यो रामपानि पाक हौं ।**
**तुलसी गोसाइँ भयो भोंडे दिन भूलि गयो,**
**ताको फल पावत निदान परिपाक हौं ॥४०॥**

**भावार्थः** म बालक अवस्थादेखि नै सोझो मनले श्रीरामचन्द्रजीको सम्मुख भएँ । मुखले रामनाम लिँदै टुकड़ा-टुकड़ी माँगेर खान्थेँ । युवावस्थामा लोकरीतिमा परेर अज्ञानवश राजा रामचन्द्रजीका चरणको पवित्र प्रीतिलाई चटपट संसारमा कुदेर तोड्न पुगेँ । त्यस समय म मोह आदिका कारण खराब आचरणलाई पछ्याउँदै थिएँ । तथापि हे अञ्जनीकुमार ! तपाईंले मलाई अपनाउनुभयो र रामचन्द्रजीको पुनीत हातबाट मेरो सुधार गराउनुभयो । यो तुलसीदास गोस्वामी हुनपुग्यो वा यसलाई गोस्वामी बनाउनुभयो र पूर्वार्धका ती खराब दिन बिस्तारै बिर्साइदिनुभयो । प्रभु ! आखिर त्यही सञ्चित पापको परिणाम आज म असह्य पीडा भोग्न विवश छु ॥४०॥

**असन-बसन-हीन बिषम-बिषाद-लीन,**
**देखि दीन दूबरो करै न हाय हाय को ।**
**तुलसी अनाथसो सनाथ रघुनाथ कियो,**
**दियो फल सीलसिंधु आपने सुभायको ॥**
**नीच यहि बीच पति पाइ भरुहाईगो,**
**बिहाइ प्रभु-भजन बचन मन कायको ।**
**तातें तनु पेषियत घोर बरतोर मिस,**
**फूटि-फूटि निकसत लोन रामरायको ॥४१॥**

**भावार्थः** भोजन वस्त्र आदिले रहित भयङ्कर विषादमा डुबेको दीनहीन दुर्बल तुलसीलाई देखेर यस्तो कुन व्यक्ति थियो जो दुःखी र दयाद्र नबनोस् । हाय हाय भनेर दयाभाव प्रकट नगरोस् । यस्तो अवस्थामा अनाथ तुलसीलाई दयासागर रघुनाथजीले सनाथ गराई स्वभाव अनुरूप उत्तमफल दिनुभयो । यही बीच यो नीच जनप्रतिष्ठा पाएर फुर्कियो । आफूलाई निकै ठूलो सम्झनपुग्यो । तन-मन-वचनले श्रीरामजीको भजन गर्न पनि विस्तारै छाडिदियो । यसैले शरीरमा भयङ्कर वातादि व्याधिको बहानाले श्रीरामको नमक फुटेर ब्रण-पीडारूपमा निक्लिँदै गरेको अनुभूति भइरहेको छ ॥४१॥

**जिऔं जग जानकी जीवनको कहाइ जन,**
**मरिबेको बारानसी बारि सुरसरिको ।**

**तुलसीके दुहूँ हाथ मोदक हैं ऐसे ठाउँ,**
**जाके जिये मुये सोच करिहैं न लरिको ॥**
**मोको झूटो साँचो लोग रामको कहत सब,**
**मेरे मन मान है न हरको न हरिको ।**
**भारी पीर दुसह सरीरतें बिहाल होत,**
**सोऊ रघुबीर बिनु सकै दूर करिको ॥४२॥**

**भावार्थः** म जनकनन्दिनीका जीवनाधार भगवान् श्रीरामको दास भनेर संसारमा जीवित रहुँ । अन्तिम घडीमा काशी तथा गङ्गाजल अर्थात् सुरसरितामा मर्न पाऊँ । यस्तो जीवन वा मरणबाट तुलसीको दुबै हातमा लड्डु हुनेछ । जसको जीवन वा मृत्युबाट बालकले पनि शोक/चिन्ता गर्ने छैनन् । झुटो-साँचो जे भएपनि सबै मानिस मलाई श्रीरामको नै दास भन्दछन् । मेरो मनमा पनि यस कुराको गर्व छ । म श्रीरामचन्द्रजीलाई छोडेर न शिवको भक्त हुँ न विष्णुको भक्त । आज म शरीरको असह्य पीड़ाले विकल भइरहेको छु , छट्पटिरहेको छु । यस पीडालाई रघुनाथजी बाहेक अरू कसैले पनि हटाउन किंवा निवारण गर्न सक्तैनन् ॥४२॥

**सीतापति साहेब सहाय हनुमान नित,**
**हित उपदेशको महेस मानो गुरुकै ।**
**मानस बचन काय सरन तिहारे पाँय,**
**तुम्हरे भरोसे सुर मैं न जाने सुरकै ॥**
**ब्याधि भूतजनित उपाधि काहु खलकी,**
**समाधि कीजे तुलसीको जानि जन फुरकै ।**
**कपिनाथ रघुनाथ भोलानाथ भूतनाथ,**
**रोगसिंधु क्यों न डारियत गाय खुरकै ॥४३॥**

**भावार्थः** हे महावीर हनुमानजी ! मर्यादा पुरुषोत्तम सीतानाथ श्रीराम तपाईंको नित्य सहायक हुनुहुन्छ । हितोपदेशको लागि महादेव मानो परमगुरु नै हुनुहुन्छ । मलाई त तन, मन र वचनले तपाईंको चरणको शरण नै प्राप्त भएको छ अनि तपाईंकै भरोसामा यो दास चलेको छ । त्यसैले देवताहरूलाई देवता गनेर मानिरहन आवश्यक ठानिन । रोग वा प्रेतद्वारा उत्पन्न अथवा कुनै दुष्टको उपद्रवबाट भएको पीड़ालाई

निवारण गरी तुलसीलाई आफ्नो सच्चा सेवक सम्झी यस पीडालाई शान्त गर्नुहोस् । हे कपिनाथ, रघुनाथ, भोलानाथ भूतनाथ ! तपाईंहरू किन रोगरूपी महासागरलाई गाईको खुरसमान बनाउनुहुन्न ॥४३॥

**कहों हनुमानसों सुजान रामरायसों,**
**कृपानिधान संकरसों सावधान सुनिये ।**
**हरष विषाद राग रोष गुन दोषमई,**
**बिरची बिरंची सब देखियत दुनिये ॥**
**माया जीव कालके करमके सुभायके,**
**करैया राम बेद कहैं साँची मन गुनिये ।**
**तुम्हतें कहा न होय हाहा सो बुझैये मोहि,**
**हौं हूँ रहों मौन ही बयो सो जानि लुनिये ॥४४॥**

**भावार्थः** असह्य पीडाले विकल म स्वयं तुलसी महावीर हनुमान जीसँग, प्रभु श्रीरामसँग एवं कृपानिधान श्रीशंकरजीसँग सविनय प्रार्थना गर्दछु। मेरो प्रार्थनालाई सावधान भएर सुनिदिनुहोस्। सामान्यतः के देखिन्छ भने विधाताले सम्पूर्ण लोकलाई हर्ष, विषाद, राग, रोष, गुण र दोषमय बनाएको छ । वेदले भनेको छ कि माया, जीव, काल, कर्म र स्वभावका स्रष्टा स्वयं भगवान् श्रीराम हुनुहुन्छ। यस विषयलाई मेरो चित्त/चेतनाले सत्य मानेको छ। हे हनुमानजी ! म तपाईंसँग सभक्ति विन्ती गर्दछु। मलाई यो सम्झाइ दिनुहोस् कि तपाईंबाट के हुन सक्तैन । त्यसपछि म पनि यो जानेर मौन रहुँला । जीवनमा मैले जस्तो बीज रोपेको थिएँ, कर्म गरेको थिएँ त्यसैको फलप्राप्त गर्नेछु अनि तदनुरूप नै प्रतिफल भोग्ने छु ॥४४॥

***

**श्रीहनुमत्गायत्री -२**
**ॐ अञ्जनीजाय विद्महे वायुपुत्राय**
**धीमहि तन्नो हनुमान् प्रचोदयात् ।**

श्रीमद्गोस्वामी तुलसीदासकृत

# श्रीहनुमानसाठिका

## (नेपाली भावार्थसहित)

### दोहा

**वीर बखानौं पवनसुत, जनत सकल जहान ।**
**धन्य-धन्य अंजनि-तनय,संकर,हर,हनुमान ॥१॥**

**भावार्थः** म तुलसीदास महावीर पवनपुत्र हनुमानजीको विमल चरित्र किंवा कीर्तिको वर्णन गर्दछु जसलाई सम्पूर्ण संसार जान्दछ । हे अञ्जनीनन्दन ! हे भगवान् शंकरजीका अवतार केसरीकुमार हनुमानजी ! तपाईं धन्य हुनुहुन्छ । धन्य हुनुहुन्छ ॥१।

**जय जय जय हनुमान अडंगी ।**
**महावीर विक्रम बजरंगी ॥२॥**
**जय कपीश जय पवन कुमारा ।**
**जय जगबन्दन सील अगारा ॥३॥**

**भावार्थः** हे परमवीर हनुमानजी ! तपाईंको जय होस् ! जय होस् ! तपाईंको गति/मार्गमा कसैले पनि कुनै प्रकारको बाधा पुर्याउन सक्दैन । हे हनुमानजी ! तपाईं वज्रसमान कठोर अङ्गवाला महावीर हुनुहुन्छ । तपाईंको जय होस् ! जय होस् ! हे पवनकुमार हनुमानजी ! तपाईं कपिहरूका राजा हुनुहुन्छ । तपाईंको जय होस् ! जय होस् ! हे हनुमानजी ! तपाईं सारा संसारका लागि वन्दनीय हुनुहुन्छ अनि असंख्य गुणहरूको भण्डार पनि हुनुहुन्छ । तपाईंको जय होस् ! जय होस् ! ॥२-३॥

**जय आदित्य अमर अबिकारी ।**
**अरि मरदन जय-जय गिरधारी ॥४॥**
**अंजनि उदर जन्म तुम लीन्हा ।**
**जय-जयकार देवतन कीन्हा ॥५॥**

**भावार्थः** हे मारुतीनन्दन हनुमानजी ! तपाईं अनेक कलामा निपुण आदित्य हुनुहुन्छ । तपाईं अमर एवम् अविकारी हुनुहुन्छ । तपाईंको जय होस् ! हे प्रभु ! तपाईं शत्रुहरूलाई नाश गर्नेवाला तथा द्रोणाचललाई उठाउनेवाला महावीर हुनुहुन्छ । तपाईंको जय होस् ! जय होस् ! हे

केसरीनन्दन हनुमानजी ! जब तपाईंले आफ्नी माता अञ्जनीका गर्भबाट यस धरामा प्रकट हुनुभयो, जन्म लिनुभयो तब सम्पूर्ण देवताहरूले तपाईंको जय-जयकार गरे । तपाईंको जय होस् ! जय होस् ! ॥४-५॥

**बाजे दुन्दुभि गगन गम्भीरा ।**
**सुर मन हर्ष असुर मन पीरा ॥६॥**
**कपि के डर गढ़ लंक सकानी ।**
**छूटे बंध देवतन जानी ॥७॥**

**भावार्थः** हे अञ्जनीनन्दन ! तपाईंको अवतरण हुँदा यस धरामा हर्षोल्लास भयो । आकाशमा दुन्दुभी बज्न थाले । देवताहरूको मनमा प्रसन्नता उत्पन्न भयो तर असुरहरूका मनमा भने सन्ताप उत्पन्न भएको थियो । हे कपिराज हनुमानजी ! तपाईंको डरका कारण लङ्काका किल्लामा खटिएका सम्पूर्ण राक्षस भयभीत भए । हे कपिश्रेष्ठ ! तपाईंले नै राक्षस रावणको कारागारबाट देवताहरूलाई मुक्त गराउनु भएको थियो ॥६-७॥

**ऋषि समूह निकट चलि आये ।**
**पवन तनय के पद सिर नाये ॥८॥**
**बार-बार अस्तुति करि नाना ।**
**निर्मल नाम धरा हनुमाना ॥९॥**

**भावार्थः** हे पवनकुमार हनुमानजी ! ऋषिमुनिहरूको समूह तपाईंका समीप आउनुभयो । हे रुद्रावतार हनुमानजी ! समस्त ऋषिमुनिहरूले नतमस्तक भएर तपाईंको चरणमा शिर झुकाउनुभयो । तपाईंको जय होस् ! जय होस् ! हे केसरीकुमार हनुमानजी ! उपस्थित सम्पूर्ण देवगण तथा ऋषिमुनिहरूले फरक-फरक विधि र प्रकारले तपाईंको बारबार स्तुतिवन्दना गर्नुभयो अनि उपस्थित देव ऋषिगणले तपाईंको निर्मल पावन नाम 'हनुमान्' राख्नुभयो ॥८-९॥

**सकल ऋषिन मिलि अस मत ठाना ।**
**दीन्ह बताय लाल फल खाना ॥१०॥**
**सुनत बचन कपि मन हर्षाना ।**
**रवि रथ उदय लाल फल जाना ॥११॥**

**भावार्थः** हे श्रीरामभक्त महावीर हनुमानजी ! तपाईंलाई सम्पूर्ण ऋषिमुनिहरूले परामर्श गरेर एकमत किंवा सर्वसम्मतिले लाल (रातो) रङ्गको फल खानका लागि प्रेरणा दिनुभयो, अभिप्रेरित गर्नुभयो । हे अञ्जनीनन्दन हनुमानजी ! तपाईं रातो/लाल रङ्गको फलको नाम सुनेर अत्यन्त हर्षित किंवा प्रसन्न हुनुभयो । उदयकालीन अरुणिमायुक्त दिनाधिपति सूर्यलाई नै रातो/लाल रङ्गको स्वादिष्ट फल सम्भेर खान खोज्नुभयो ॥१०-११॥

**रथ समेत कपि कीन्ह अहारा ।**
**सूर्य बिना भए अति अंधियारा ॥१२॥**
**विनय तुम्हार करै अकुलाना ।**
**तब कपीस की अस्तुति ठाना ॥१३॥**

**भावार्थः** तब हे हनुमानजी ! तपाईंले रथसहित सूर्यलाई हातले समातेर आफ्नो मुखमा राख्नुभयो वा निल्नुभयो । तब सम्पूर्ण लोकमा अचानक अँध्यारो व्याप्त भयो, सबैमा अधिक भय उत्पन्न भयो । सृष्टिमा हाहाकार मच्चियो । हे कपिश्रेष्ठ महावीर हनुमानजी ! भगवान् सूर्य नारायणबिना जब सम्पूर्ण सृष्टि किंवा जीवनजगत् नै सङ्कटग्रस्त बन्यो । तब सम्पूर्ण देवता तथा ऋषिमुनिहरूले अत्यन्त व्याकुल भएर तपाईंको स्तुतिवन्दना गर्न थाले ॥१२-१३॥

**सकल लोक वृतान्त सुनावा ।**
**चतुरानन तब रवि उगिलावा ॥१४॥**
**कहा बहोरि सुनहु बलसीला ।**
**रामचन्द्र करिहैं बहु लीला ॥१५॥**

**भावार्थः** हे पवनसुत महावीर हनुमानजी ! सारा सृष्टि वा जीवनजगत्को यस्तो दशा किंवा ऋषिमुनि, देवता, मानव आदिको व्याकुलता सुनेर जानेर पितामह ब्रह्माजीले सूर्यलाई मुक्त गर्नका लागि तपाईंलाई मनाउनुभयो । त्यस समय पितामह ब्रह्माजीले तपाईंसँग विनती गर्दै भन्नुभएको थियो । हे महावीर हनुमानजी ! तपाईं सुनिदिनुहोस् । भगवान् श्रीरामचन्द्रजी आगामी समय (निकट भविष्य) मा मर्यादापूर्ण लीलाहरू गर्दै हुनुहुन्छ । ॥१४-१५॥

**तब तुम उन्हकर करेहू सहाई ।**
**अबहिं बसहु कानन में जाई ॥१६॥**
**असकहि विधि निजलोक सिधारा ।**
**मिले सखा संग पवन कुमारा ॥१७॥**

**भावार्थ**: तब पितामह ब्रह्माजीले हनुमानजीसँग भन्नुभयो । हे महावीर ! तपाईंले मर्यादापुरुषोत्तम श्रीरामचन्द्र प्रभुको सहायता गर्नुपर्छ । अहिले तपाईं वनमा गएर केही समय बिताउनुहोस् किंवा प्रभु श्रीरामको सेवाको प्रतीक्षा गर्नुहोस् । हे महावीर हनुमानजी ! तपाईंलाई यति भनेर पितामह ब्रह्माजी आफ्नो लोकमा जानुभयो । हे पवनकुमार ! तपाईंले पनि आफ्ना प्रिय सखा/साथीहरूलाई भेट्नुभयो । उनीहरूसँग मिल्नुभयो अर्थात् बालसुलभ खेलमा स्वयं पनि सामेल हुनुभयो ॥१६-१७॥

**खेलैं खेल महा तरु तोरैं ।**
**ढेर करैं बहु पर्वत फोरैं ॥१८॥**
**जेहि गिरि चरण देहि कपि धाई ।**
**गिरि समेत पातालहिं जाई ॥१९॥**

**भावार्थ**: हे वानराधिपति महावीर हनुमानजी ! तपाईंले खेल -खेलमा किंवा लीलापूर्वक ठूलाठूला वृक्षहरू उखेल्नुभयो, भाँच्नुभयो वा नष्ट गर्नुभयो । अनि धेरैजसो पर्वतहरूलाई पनि तोड़फोड़ गरेर थुप्रो समान बनाइदिनुभयो । हे हनुमानजी ! तपाईंको शक्ति अपरम्पार छ । हे पवनपुत्र ! तपाईंले जुनजुन पर्वत या भूमिमा आफ्नो शक्तिशाली चरण राख्नुभयो । त्यो त्यो पर्वत किंवा भूमि पनि पातालमा समाहित भयो किंवा मिल्यो ॥१८-१९॥

**कपि सुग्रीव बालि की त्रासा ।**
**निरखति रहे राम मगु आसा ॥२०॥**
**मिले राम तहं पवन कुमारा ।**
**अति आनन्द सप्रेम दुलारा ॥२१॥**

**भावार्थ**: वानरराज सुग्रीव आफ्ना ठूलादाजु बालिसँग बहुत डराएका थिए । परन्तु सुग्रीवको मनमा प्रभु श्रीरामचन्द्रजी आउनुहुन्छ भन्ने विशेष आशा अनि भरोसा थियो । यही आशा र भरोसाले सुग्रीवले

आफूलाई निर्भय किंवा निडर बनाइराखेका थिए । हे पवनकुमार हनुमानजी ! तपाईंले जब वानरराज सुग्रीवलाई ल्याएर भगवान् श्रीरामचन्द्रजीसँग भेट गराइदिनुभयो र आदर्श मित्र बनाइदिनुभयो तब तपाईंलाई अत्यधिक प्रेम र आनन्दको अनुभूति भयो ॥२०-२१॥

**मनि मुंदरी रघुपति सों पाई ।**
**सीता खोज चले सिरु नाई ॥२२॥**
**सतयोजन जलनिधि विस्तारा ।**
**अगम अपार देवतन हारा ॥२३॥**

**भावार्थः** हे केसरीनन्दन महावीर हनुमानजी ! सीता माताको पहिचान हेतु तपाईंले प्रभु श्रीरामचन्द्रजीबाट मणिजडित औँठी पाउनुभयो । हे श्रीरामदूत हनुमानजी ! तपाईं त्यो औँठी लिएर सीता माताको खोजीका लागि निस्कनुभयो । हे अतुलित बलशाली हनुमान जी ! तपाईं जब सीता माताको खोजीमा निस्कनुभयो । तपाईंको अगाडि शतयोजन विस्तृत अति दुर्गम जलनिधि/महासागर थियो जसलाई पार गर्न किंवा तर्न देवता र मुनिजन पनि असमर्थ थिए ॥२२-२३॥

**जिमि सर गोखुर सरिस कपीसा ।**
**लांघि गये कपि कहि जगदीशा ॥२४॥**
**सीता चरण सीस तिन्ह नाये ।**
**अजर अमर के आसिस पाये ॥२५॥**

**भावार्थः** हे केसरीकुमार महावीर हनुमानजी ! तपाईंले त त्यस शतयोजन विस्तृत विशाल महासागरलाई जय जगदीश ! अर्थात् जय श्रीराम ! भनेर बिनाविश्राम सहजरूपमा नै गाईको खुरको जलसमान नाघ्नुभयो अर्थात् पार गर्नुभयो । हे पवनकुमार हनुमानजी ! तपाईंले लङ्कामा पुगी शिर निहुर्‍याएर सीता माताको दर्शन गर्नुभयो, प्रभु श्रीरामचन्द्रको सन्देश सुनाउनुभयो अनि सीताजीको चरणारविन्दको वन्दना गर्नुभयो । यस कार्यप्रति प्रसन्न भएर माता सीताजीले तपाईंलाई अजर अमर हुने आशीर्वाद किंवा वरदान दिनुभयो ॥२४-२५॥

**रहे दनुज उपवन रखवारी ।**
**एक से एक महाभट भारी ॥२६॥**

**तिन्हैं मारि पुनि कहेउ कपीसा ।**
**दहेउ लंक कोप्यो भुज बीसा ॥२७॥**

**भावार्थः** हे महावीर हनुमानजी ! त्यस स्वर्णमयी लङ्का नगरीमा एकसेएक महाभयङ्कर बलशाली राक्षस योद्धाहरू थिए । ती बलशाली राक्षस योद्धाहरूमध्ये कैऔँ योद्धा अशोक उपवन/वाटिकाको रक्षा किंवा रखवारी गर्नका लागि खटिएका थिए । हे कपिश्रेष्ठ हनुमानजी ! तपाईंले ती महाभयङ्कर राक्षसहरूको संहार गर्नुभयो । अशोक बाटिका/उपवनलाई पनि नष्ट गरेर स्वर्णमयी लङ्का नगरीलाई जलाउनुभयो । जसबाट लङ्कापति रावण पनि भयभीत भएर काँपेको थियो ॥२६-२७॥

**सिया बोध दै पुनि फिर आये ।**
**रामचन्द्र के पद सिर नाये ॥२८॥**
**मेरु उपारि आप छिन माहीं ।**
**बांधे सेतु निमिष इक मांहीं ॥२९॥**

**भावार्थः** हे महावीर हनुमानजी ! त्यसपछि तपाईंले माता सीताजीलाई प्रभु श्रीरामको सन्देश सुनाई आश्वस्त गराउनुभयो । धैर्य बनाइराख्न विन्ती गर्नुभयो । लङ्काबाट फर्केर श्रीरामजीका चरणकमलमा शिर झुकाएर नमन गर्नुभयो । हे हनुमानजी ! रावण, कुम्भकर्ण आदि दुष्ट राक्षसहरूको अन्त्य गर्ने उद्देश्यले लङ्का नगरीमा प्रभु श्रीरामका सेनाहरू लैजानका लागि ठूलाठूला पर्वतहरू ल्याएर क्षणभरमा समुद्रमा विशाल पुल बाँध्नुभयो । ॥२८-२९॥

**लछमन शक्ति लागी उर जबहीं ।**
**राम बुलाय कहा पुनि तबहीं ॥३०॥**
**भवन समेत सुषेन लै आये ।**
**तुरत सजीवन को पुनि धाये ॥३१॥**

**भावार्थः** हे हनुमानजी ! लङ्का युद्धको समयमा जब प्रभु श्रीरामका भाइ लक्ष्मणलाई रावणपुत्र मेघनादले प्रहार गरेको अमोघ शक्ति लाग्यो तब श्रीरामजीले तपाईंलाई बोलाउनुभयो । भाइ लक्ष्मणलाई मुर्च्छित जानेर बहुत विलाप गर्नुभयो । हे महावीर हनुमानजी ! त्यस्तो आपत्तिको

समयमा तपाईंले लङ्काधीशको राजवैद्य सुषेणलाई भवनै सहित उठाएर ल्याउनुभयो । लक्ष्मणजीको प्राण बचाउँनका लागि तपाई आँफै तत्कालै ठूलो वेगले संजीवनी बूटी लिन दौडनुभयो ॥३०-३१॥

**मग महं कालनेमि कहं मारा ।**
**अमित सुभट निसिचर संहारा ॥३२॥**
**आनि संजीवन गिरि समेता ।**
**धरि दीन्हों जहं कृपा निकेता ॥३३॥**

**भावार्थः** हे रुद्रावतार हनुमानजी ! तपाईंले संजीवनी बूटी लिन जाँदा मार्गमा कालनेमि असुरलाई मार्नुभयो । असंख्य निशाचर योद्धा जसले मार्ग अवरुद्ध गर्न कोशिस गरे ती निशाचरहरू लाई पनि नष्ट गरिदिनुभयो । हे महावीर हनुमानजी ! तपाईंले अन्तमा द्रोणाचल पर्वतसहित संजीवनी बूटी ल्याएर करुणा निधान प्रभु श्रीरामका चरणारविन्द/पासमा राखिदिनुभयो किंवा संजीवनी बूटी दिएर लक्ष्मणजीको प्राण बचाइदिनुभयो ॥३२-३३॥

**फनपति केर सोक हरि लीन्हा ।**
**वर्षि सुमन सुर जय जय कीन्हा ॥३४।**
**अहिरावण हरि अनुज समेता ।**
**लै गयो तहां पाताल निकेता ॥३५॥**

**भावार्थः** हे महावीर हनुमानजी ! तपाईंले यस प्रकार प्रभु श्रीरामका प्रियभाइ लक्ष्मणलाई बचाउनुभयो । प्राणसङ्कट निवारण गर्नुभयो । इन्द्रादि देवता मिलेर शुद्ध मनले तपाईंमाथि पुष्प वर्षा गरे अनि हर्षले तपाईंको जय-जयकार गरे । हे महावीर हनुमानजी ! लक्ष्मणजीको प्राणको सङ्कट निवारण भएपछि पनि मायावी दुष्टराक्षस अहिरावणले छलकपट गरेर प्रभु श्रीरामजी र अनुज लक्ष्मणजीलाई बलिका लागि पातालमा लिएर गयो ॥३४-३५॥

**जहां रहे देवि अस्थाना ।**
**दीन चहै बलि काढिँ कृपाना ॥३६॥**
**पवनतनय प्रभु कीन गुहारी ।**
**कटक समेत निसाचर मारी ॥३७॥**

**भावार्थः** हे पवनपुत्र हनुमानजी ! रावणपुत्र दुष्टराक्षस अहिरावणले त्यहाँ पातालदेवीको मन्दिरमा प्रभु श्रीरामजी र भ्राता लक्ष्मणजीको बलि दिनका लागि उसले विशाल तलवार निकालेको थियो । हे हनुमानजी ! त्यही समयमा तपाईंले पाताल देवीको मन्दिरमा पुगेर त्यस दुष्टराक्षस अहिरावण लाई लल्कार्नुभयो र सम्पूर्ण सेना र सहयोगीसहित संहार गर्नुभयो ॥३६-३७॥

**रीछ कीसपति सबै बहोरी ।**
**राम लषन कीने यक ठोरी ॥३८॥**
**सब देवतन की बन्दि छुड़ाये ।**
**सो कीरति मुनि नारद गाये ॥३९॥**

**भावार्थः** अहिरावणको मृत्यु पश्चात् हे परमप्रतापी पवनकुमार हनुमानजी ! तपाईंले जहाँ महाऋक्ष जाम्बन्तजी र वानरराज सुग्रीवजी हुनुहुन्थ्यो त्यहाँ प्रभु श्रीरामचन्द्रजी तथा भ्राता लक्ष्मणजीलाई पुऱ्याइदिनु भयो र सबैमा हर्ष बढाइदिनुभयो । हे कपिश्रेष्ठ हनुमानजी ! तपाईंले सम्पूर्ण देवताहरूलाई राक्षसहरूको बन्धनबाट मुक्त गरिदिनुभयो । त्यसैले हे महावीर हनुमानजी ! देवर्षि नारदजीले तपाईंको चरित्र, यश किंवा कीर्तिको गायन गर्दै प्रशंसा गर्नुभयो ॥३८-३९॥

**अछयकुमार दनुज बलवाना ।**
**कालकेतु कहं सब जग जाना ॥४०॥**
**कुम्भकरण रावण का भाई ।**
**ताहि निपात कीन्ह कपिराई ॥४१॥**

**भावार्थः** हे अञ्जनीनन्दन हनुमानजी ! दशानन रावणको कान्छो छोरो अक्षयकुमार एक शूर वीर बलवान् राक्षस थियो । त्यस अक्षयकुमारलाई सम्पूर्ण जगत कालकेतुको नामले जान्दथे जसको संहार/विनाश तपाईंले नै गर्नुभएको हो । हे वानरराज हनुमानजी ! लङ्काधिपति रावणको एउटा भाइ कुम्भकर्ण थियो जो अति भयङ्कर र महान् बलशाली थियो । हे कपिराज महावीर हनुमानजी ! कुम्भकर्ण आदि धेरै राक्षसहरूको विनाशमा तपाईं नै सहायक बन्नुभयो ॥४०-४१॥

**मेघनाद पर शक्ति मारा ।**
**पवन तनय तब सो बरियारा॥४२॥**
**रहा तनय नारान्तक जाना ।**
**पल में हते ताहि हनुमाना ॥४३॥**

**भावार्थः** हे पवनकुमार हनुमानजी ! तपाईंले लङ्कायुद्धमा दशानन रावणपुत्र महान् बलशाली मेघनाद (इन्द्रजित) लाई समेत पछार्नुभएको थियो । हे पवनतनय ! हे सङ्कटमोचन ! यस संसारमा तपाईंसमान पराक्रमशाली अर्को कोही पनि छैन । हे महावीर हनुमानजी ! मूल नक्षत्रमा जन्मिएको नरान्तक राक्षस जुन लङ्काधिपति रावणको पुत्र थियो । हे हनुमानजी ! तपाईंले त्यस राक्षसलाई पनि क्षणभरमा परास्त गर्नुभयो । त्यसको संहार किंवा विनास गरिदिनुभयो ॥४२-४३॥

**जहं लगि भान दनुज कर पावा ।**
**पवन तनय सब मारि नसावा ॥४४॥**
**जय मारुत सुत जय अनुकूला ।**
**नाम कृसानु सोक सम तूला ॥४५॥**

**भावार्थः** हे पवनकुमार महावीर हनुमानजी ! तपाईंले जहाँ-जहाँ दुष्ट दानव, असुर वा राक्षसहरूलाई भेट्नुभयो । हे रुद्रावतार हनुमानजी ! साधुहरूको रक्षाका लागि तपाईंले ती दुष्ट असुर, राक्षस सबैलाई संहार गरिदिनुभयो । हे मारुतीनन्दन हनुमानजी ! तपाईंको जय होस् ! जय होस् ! जय होस् ! तपाईं आफ्ना सेवकहरूको हरेक कार्यलाई सिद्ध गर्नका निम्ति सहायक हुनुहुन्छ । ती सेवकहरूको शोकरूपी कपासलाई जलाउनमा तपाईंको नाम अग्निसमान छ ॥४४-४५॥

**जहं जीवन के संकट होई ।**
**रवि तम सम सो संकट खोई ॥४६॥**
**बन्दि परै सुमिरै हनुमाना ।**
**संकट कटै धरै जो ध्याना ॥४७॥**

**भावार्थः** हे पवनतनय हनुमानजी ! कसैको जीवनमा कुनै पनि प्रकारको सङ्कट छ भने तपाईंले त्यसलाई पलभरमा नै दूर किंवा निवारण गरिदिनुहुन्छ । जसरी जतिसुकै घना/बाक्लो अँधेरो भए पनि

त्यसलाई सूर्यले पलभरमा नै नाश गरिदिन्छ । हे महावीर हनुमानजी ! कुनै सङ्कट वा बन्धनमा परेको अवस्थामा जसले तपाईंको स्मरण अनि ध्यान गर्दछ । उसको रक्षा गर्न किंवा उसलाई बन्धनबाट मुक्त गराउनका निमित्त तपाईं गदा लिएर शीघ्रातिशीघ्र पुग्नुहुन्छ ॥४६-४७॥

**जाको बांध बामपद दीन्हा ।**
**मारुत सुत व्याकुल बहु कीन्हा ॥४८॥**
**सो भुजबल का कीन कृपाला ।**
**अच्छत तुम्हें मोर यह हाला ॥४९॥**

**भावार्थः** हे मारुतीनन्दन हनुमानजी ! तपाईंले त यमलाई पनि वामदिशा वा अन्तरिक्षतर्फ फ्याँकिदिनुहुन्छ । मृत्युका देवतालाई पनि आकुल-व्याकुल बनाइदिनुहुन्छ । धेरै नराम्रो दशामा पुर्याइदिनुहुन्छ । हे कृपासागर महावीर हनुमानजी ! तपाईंको बाहुबल वा सम्पूर्ण बल/शक्ति अहिले कहाँ गयो ? हे दयानिधान हे कपिश्रेष्ठ हनुमानजी ! तपाईं हुँदाहुँदै वा रहँदारहँदै पनि मेरो यस्तो दुरावस्था हाल किंवा दशा भइरहेको छ ॥४८-४९॥

**आरत हरन नाम हनुमाना ।**
**सादर सुरपति कीन बखाना ॥५०॥**
**संकट रहै न एक रती को ।**
**ध्यान धरै हनुमान जती को ॥५१॥**

**भावार्थः** हे सङ्कटमोचन हनुमान जी ! तपाईंको नाम नै सङ्कटमोचन हो । तपाईंले आर्ती भक्तहरूको आर्त, पीडा वा सङ्कट हरण गर्नुहुन्छ । स्वयं सरस्वती माता र देवराज इन्द्रले पनि आदरपूर्वक तपाईंको बखान/वर्णन गर्नुहुन्छ । हे पवनपुत्र ! हनुमानजी ! जसले तपाईंको ध्यान धारणा गर्दछ तिनीहरूको जीवनमा कहिल्यै एकरत्ती बराबर पनि सङ्कट रहन सक्तैन । किनकि तपाईं तिनीहरूलाई सङ्कटबाट मुक्त गराउनुहुन्छ ॥५०-५१॥

**धावहु देखि दीनता मोरी ।**
**कहौं पवनसुत जुगकर जोरी ॥५२॥**

**कपिपति बेगि अनुग्रह करहु ।**
**आतुर आइ दुसै दुख हरहु ॥५३॥**

**भावार्थः** हे पवनतनय हनुमानजी ! हे कृपानिधान ! मलाई कृपा गर्नुहोस् । मेरो दीनता देखेर अति तीव्रगतिले आउनुहोस् । मलाई यी सारा बन्धनहरूबाट मुक्त गरिदिनुहोस् । हे दयासागर हनुमानजी ! म तपाईंसँग दुई हात जोड़ेर विन्ती गर्दछु । हे कपिश्रेष्ठ हनुमानजी ! तपाईंले यो दासमाथि विशेष अनुग्रह गरी यथाशीघ्र आफ्नो कृपादृष्टि बर्साउनुहोस् । हे सङ्कटमोचन ! तपाईं मेरो दुःसह दुःख-कष्ट हरण गर्नका लागि आतुर भएर शीघ्रातिशीघ्र आउनुहोस् । मेरो उद्धार गर्नुहोस् ॥५२-५३॥

**राम सपथ मैं तुमहिं सुनाया ।**
**जवन गुहार लाग सिय जाया ॥५४॥**
**यश तुम्हार सकल जग जाना ।**
**भव बन्धन भंजन हनुमाना ॥५५॥**

**भावार्थः** हे महावीर हनुमानजी ! मेरो दुःसह दुःखकष्ट हरण गरिदिनुहोस् । यदि मेरो पुकार सुनेर पनि तपाईं मेरो दुःसह कष्ट हरण गर्न आउनुहुन्न भने त म तपाईंलाई सीतापति प्रभु श्रीरामचन्द्रको शपथ सुनाउँछु वा सपथ लिन्छु । हे पवनसुत हनुमानजी ! तपाईंको यश वा कीर्ति सारा संसार जान्दछ । हे सङ्कटमोचन हनुमानजी ! तपाईंले नै यस संसारको बन्धन किंवा बारबार प्राप्त हुने जन्म-मरणरूप भयलाई पनि भञ्जन किंवा निवारण गरिदिनुहुन्छ ॥५४-५५॥

**यह बन्धन कर केतिक बाता ।**
**नाम तुम्हार जगत सुखदाता ॥५६॥**
**करौ कृपा जय जय जग स्वामी ।**
**बार अनेक नमामि नमामी ॥५७॥**

**भावार्थः** हे महाबली हनुमानजी ! फेरि मेरो यो बन्धन त बारबार प्राप्त हुने जन्म-मरणरूप भयका अगाडि केही पनि होइन । हे दयासागर ! तपाईंको नाम त जगतमा सुखदाता अर्थात् सबैलाई सुख प्रदान गर्नेवाला छ । हे जगत्का स्वामी कपिराज हनुमानजी ! तपाईंको जय होस् ! जय होस् ! तपाईंले दीनहीन दुःखी म तुलसीदासमाथि कृपा गरिदिनुहोस् । हे हनुमानजी ! म तपाईंलाई अनेकबार नमस्कार गर्दछु , नमस्कार गर्दछु ॥५६-५७॥

**भौमवार कर होम विधाना ।**
**धूप दीप नैवेद्य सुजाना ॥५८॥**
**मंगल दायक को लौ लावे ।**
**सुन नर मुनि वांछित फल पावे ॥५९॥**

**भावार्थः** हे केसरीकिशोर हनुमानजी ! तपाईंका जुनजुन भक्तले प्रत्येक मंगलवारको दिन विशेष श्रद्धा, भक्ति तथा विधि-पूर्वक हवन गर्दछन् । हे कृपानिधान हनुमानजी ! सभक्ति धूप, दीप र नैवेद्य आदि समर्पित गर्दछन् । साथै मङ्गलकारी श्रीरामभक्त श्रीहनुमानजीमा जजसले ध्यान लगाउँछन् ती चाहे देवता हुन् , चाहे ती ऋषिमुनि हुन् या ती मनुष्य नै किन नहुन् । तिनीहरूले तत्काल मनोबाञ्छित फलप्राप्त गर्दछन् ॥५८-५९॥

**जयति जयति जय जय जग स्वामी ।**
**समरथ पुरुष सुअन्तरजामी ॥६०॥**
**अंजनि तनय नाम हनुमाना ।**
**सो तुलसी के प्राण समाना ॥६१॥**

**भावार्थः** हे जगतका स्वामी हनुमान जी ! तपाईंको जय होस् ! जय होस् ! जय होस् ! हे महावीर हनुमान जी ! तपाईं समर्थवान् हुनुहुन्छ । विश्वात्मा र अन्तर्यामी हुनुहुन्छ । तपाईं सबैको मनको कुरा र भाव राम्ररी जान्नुहुन्छ । हे अञ्जनीनन्दन ! तपाईं माता अञ्जनीका सन्तान भएका कारण तपाईंको प्रिय नाम आञ्जनेय हो । तपाईं तुलसीदासको कृपानिधान हुनुहुन्छ अनि तुलसीदासका प्राणसमान पनि हुनुहुन्छ ॥६०-६१॥

**दोहा**

**जय कपीस सुग्रीव तुम, जय अंगद हनुमान ।**
**राम लषन सीता सहित, सदा करो कल्याण ॥६२॥**

**भावार्थः** वानरराज सुग्रीवजीको जय होस् ! युवराज अङ्गदजीको जय होस् ! कपिश्रेष्ठ श्रीरामदूत हनुमानजीको जय होस् ! माता सीता सहित प्रभु श्रीरामचन्द्रजी र भ्राता लक्ष्मणजी तपाईंहरूले हामी सबैको सदैव कल्याण गरिदिनुहोस् ॥६२॥

**बन्दौं हनुमत नाम यह, भौमवार परमान ।**
**ध्यान धरै नर निश्चय,पावै पद कल्याण ॥६३॥**

**भावार्थः** मंगलवारका दिनलाई प्रमाण मानेर जुन मानिसले अञ्जनीनन्दन हनुमानजीको यो वन्दना किंवा पाठ गर्दछ । अनि एकाग्र भएर ध्यान पनि गर्दछ भने उसले निश्चय नै कल्याणकारी परमपदलाई प्राप्त गर्दछ ॥६३॥

**जो नित पढ़ै यह साठिका, तुलसी कहैं बिचारि ।**
**रहै न संकट ताहि को, साक्षी हैं त्रिपुरारि ॥६४॥**

**भावार्थः** गोस्वामी तुलसीदासजीले धेरै सोचविचार गरी आफ्नो अन्तर्भाव व्यक्त गर्दै घोषणा गर्नुहुन्छ – 'जो मानिस यस हनुमान साठिकाको नित्य निरन्तर पाठ गर्दछ त्यो मानिस कहिल्यै पनि सङ्कट किंवा विपत्तिमा पर्दैन । स्वयं त्रिपुरारि शिवजी यसको साक्षी हुनुहुन्छ ।' ॥६४॥

**सवैया**

**आरत बन पुकारत हौं कपि-**
**नाथ सुनो विनती मम भारी ।**
**अंगद औ नल-नील महाबलि**
**देव सदा बल की बलिहारी ॥**
**जाम्बवन्त सुग्रीव पवन-सुत**
**दिबिद मयंद महा भटभारी ।**
**दुःख दोष हरो तुलसी जन-को**
**श्रीद्वादश बीरन की बलिहारी ॥६५॥**

**भावार्थः** सन्तकवि गोस्वामी तुलसीदासजी भन्नुहुन्छ - 'हे हनुमानजी ! म ठूलो विपत्तिमा तपाईंको पुकार गरिरहेको छु । - तपाईं मेरो प्रार्थना सुन्नुहोस् । अङ्गद, नल, नील, महादेव, राजा बलि, भगवान् श्रीराम (देव) बलराम, महाभट जाम्बवन्त, सुग्रीव, पवनपुत्र हनुमान, द्विबिद र मयन्द - यी बाह्र वीरहरूको म बलिहारी (न्यौछावर) छु । कृपा गरेर भक्तको दुःख र दोषलाई हरण गर्नुहोस् ॥६५॥

***

श्रीहनुमते नमः

# वेदादिमा हनुमच्चिन्तन

**शिवं स तनुतां रामो यस्य दूतं महाबलम् ।**
**स्तौति वायुसुतं वीरमग्निमित्यादिका श्रुतिः ॥**

वायुदेवांशोद्भव केसरीनन्दन श्रीरामदूत श्रीहनुमानजीको स्वरूपको वेद, उपनिषद् आदिमा साङ्गोपाङ्ग विवेचन गरिएको छ । वैष्णव शिरोमणि महावीर हनुमानजी परब्रह्म किंवा भगवान् श्रीहरिहरको साक्षात् स्वरूप हुनुहुन्छ । उहाँ श्रीरामको दास्यभक्ति तथा जगत्कल्याण हेतु रुद्ररूपमा प्रकट महादिव्य शक्ति र भागवत ज्योतिको प्रतीक हुनुहुन्छ । अष्टसिद्धि एवं नवनिधिका दाता मङ्गलमूर्ति हनुमानजी ज्ञान, गुण र करुणाका सागर हुनुहुन्छ । उहाँको नित्य स्मरणबाट मनुष्यमा बुद्धि, बल, यश, धैर्य, निर्भयता, आरोग्य, विवेक आदि सद्गुण प्राप्त हुन्छन् ।

वेदादिमा जहाँ-जहाँ भगवान् श्रीरामकृष्ण (ब्रह्मा, विष्णु, शिव, अग्नि आदि) को तत्त्व, रहस्य र महिमाको वर्णन छ त्यहाँ-त्यहाँ हनुमानजीको बल, विद्या, ज्ञान, बुद्धि, धैर्य, पराक्रम, उत्साह, कार्यकुशलता, भगवद्भक्ति आदिको सुन्दर निरूपण तथा अभीष्टफलदाता परमदेवता महावीर हनुमानजीको पुण्य चरित्रको सविस्तार वर्णन गरिएको छ । किन्तु यहाँ वेदादिबाट उद्धृत हनुमत्स्वरूप निर्देशक केही मन्त्र र तिनको यथामति हनुमत्परक भावार्थ नेपालीमा प्रस्तुत गर्ने प्रयास गरेको छु ।

**अग्निमिडे पुरोहितं यज्ञस्य देवमृत्विजं**
**होतारं रत्नधातवम् । ऋग्वेद १।१।१**

**भगवतः श्रीरामचन्द्रस्य प्रीत्यर्थं देवं विजिगीषुं, ऋत्विजं निशाचर-भयप्रदम् , होतारम् अक्षयादिनां निशाचराणां विनाशकम्, रत्नधातवं श्रीराम-प्रदत्तरामनामङ्कितमङ्गुलीयकधारकं श्रीसीताप्रदत्त-मणिरत्नचूडामणि-ग्राहकञ्च, यज्ञस्य सङ्गमनमैत्रीहेतोः सुग्रीवेण श्रीरामपार्श्वे संप्रेषितस्य विष्णोः सीतापतेः भगवतः श्रीराचन्द्रस्य पुरोहितं दूतम्, अग्निं वायोः पुत्रं हनुमन्तं ईडे स्तौमि ।**

दशरथनन्दन भगवान् श्रीरामको प्रसन्नताका लागि महत्त्वाकाङ्क्षा किंवा विजयको इच्छा राख्नेवाला, समुद्र पार गरी लङ्का

पुगेर राक्षसहरूको हृदयलाई कम्पित, विदीर्ण किंवा भयभीत गराउनेवाला, युद्धका निमित्त अशोकवाटिकामा रावणपुत्र अक्षयकुमार आदि निशाचर हरूलाई लल्कार्ने र तिनलाई विनाश गर्नेवाला, श्रीरामप्रदत्त रामनामङ्कित औँठी धारण गर्नेवाला तथा माता सीताप्रदत्त रत्नजडित चूडामणि ग्रहण गर्नेवाला, सङ्गमनमैत्रीहेतु सुग्रीवद्वारा श्रीरामपार्श्वमा संप्रेषित यज्ञ **'यज्ञो वै विष्णुः' इति (शतपथ-ब्राह्मण १।१।२)** विष्णु किंवा सीतापति भगवान् श्रीराचन्द्रका पुरोहित दूत अग्निस्वरूप वायुपुत्र हनुमानजीको म स्तुतिपूर्वक वन्दना गर्दछु ।

**अग्निं दूतं वृणीमहे होतारं विश्ववेदसम् ।**
**अस्य यज्ञस्य सुक्रतुम् ।  ऋग्वेद १।१२।१**

**अग्निं दनुजवनकृशानुं वायोः पुत्रम्, होतारं रक्षोविनाशकम् , विश्ववेदसं सर्वज्ञं बुद्धिमतां वरिष्ठं , अस्य यज्ञस्य 'यज्ञो वै विष्णुः' इति (शतपथ-ब्राह्मण १।१।२) दशरथनन्दनस्य श्रीरामस्य दूतं पुरोहितम् , सुक्रतुं श्रीरामप्रीत्यर्थं शोभनकर्मणि कृतवन्तं हनुमन्तं वृणीमहे ।**

अग्नि अग्रणी वानराग्रणी मारुतीनन्दन अर्थात् दैत्यदानवरूपी वनलाई जलाउनेवाला, युद्धमा राक्षसहरूलाई लल्कार्दै विनाश गर्नेवाला, सर्वज्ञ समस्त विद्वान्हरूमा श्रेष्ठ, ध्यानको परिपाक अवस्थामा भक्तको समक्ष उपस्थित वा लोककल्याण हेतु धराधाममा अवतीर्ण श्रीरामका दूत, भगवान् श्रीरामको प्रसन्नतार्थ समुद्रोल्लङ्घन, सीता-अन्वेषण, युद्धभूमिमा मूर्च्छित लक्ष्मणको पुनर्जीवनका लागि सञ्जीवनी औषधिको उद्गमस्थान द्रोणाचल ल्याउनेजस्ता लोकोत्तर पराक्रम गर्ने महावीर हनुमानजीलाई हामी भक्तहरू उपास्यरूपमा स्वीकार गर्दछौं किंवा प्रार्थना गर्दछौं ।

**उपो मतिः पृच्यते सिच्यते मधु मन्द्राजनी चोदते**
**अन्तरासनि । ऋग्वेद ९।६९।२, सामवेद ११।३।१।२**

**'उपो–उपैव समीपे एव मतिर्मेधावी हनुमान् पृच्यते संयुज्यते, तेन च मातुः कर्णे मधु मधुरम् अमृततुल्यं वाक्यं – 'जयत्यतिबलो रामो लक्ष्मणश्च महाबलः' इत्यादिकं सिच्यते श्राव्यते ।' मन्त्ररामायण-७६**

वायुपुत्र हनुमानजीले समुद्र पार गरी अत्यन्त रमणीय लङ्काको अशोक वाटिकामा सीता माताको दर्शन गर्नुभयो । त्यसपछि ज्ञानवान् मतिवान् मेधावी हनुमानजीले माता जानकीको नजिक गएर कानमा

अमृततुल्य मधुर वचन सुनाउनुभयो। अर्थात् **'जयत्यतिबलो रामो लक्ष्मणश्च महाबलः'** इत्यादि वाणीले अमृतसिञ्चन गर्न आरम्भ गर्नु भयो।

**देवास आयन्परशूँ अबिभ्रन् वना वृश्चन्तो अभि विड्भिरायन्।**
**निसुद्रुवं दधतो वक्षणासु यत्रा कृपीटमनु तद्दहन्ति।**
**ऋग्वेद १०।२८।८**

**देवासः बहवः देवाः सुराः, अशोकवाटिकायां आयत्, अस्माकं परश्वादिकान् आयुधान् आहृत्य अबिभ्रन्, विड्भिः अस्मत्सन्तानादिभिः परिवारैः सह वना अशोकवाटिका वृश्चन्तः अभि आयन् चतुः दिक्षु धावन्ति। ते देवाः निसुद्रुवं वक्षणासु दावाग्निरिव दधतः अनुयत्र कृपीटम् काष्ठादिकं दहन्ति। ते सर्वे सुरास्तद् कुञ्जादिकञ्च अनुदहन्ति।**

महावीर हनुमानजीले रावणको परमप्रिय अशोकवाटिका ध्वस्त गर्दै रक्षकहरूलाई समेत मार्न थालेपछि भागेर बाँचेका घाइते राक्षसहरू गएर लङ्काधिपति रावणसँग भने – हे महाराज अहिले धेरै देवताहरू अशोकवनमा आएका छन्। तिनले हाम्रा परशु आदि हतियार लुटेर धारण गरेका छन्। हाम्रा सन्तान र परिवारसहित अशोकवनलाई नष्टभ्रष्ट गर्दै चारैतिर निकै दौडिरहेका छन्। अत्यन्त शीघ्रगामी दावाग्निले झैं घरहरूलाई जलाउँदै पछाडिबाट अलग रहेका काष्ठ आदिलाई पनि नष्ट गर्दैछन्। यसरी सबै देवताहरूले एकएक वृक्ष, कुञ्ज, घर आदि जलाएर विनाश गर्दैछन्।

**रक्षोहणं वाजिनमाजिघर्मि मित्रं प्रतिष्ठमुप यामि शर्म।**
**शिशानो अग्निः क्रतुभिः समिद्धः स नो दिवा सरिषः पातु नक्तम्॥**
**ऋग्वेद १०।८७।१ अथर्ववेद ८।३।१**

**'....रक्षोहणं रक्षसाम् अक्षादिनां हन्तारं वाजिनं हरिं वानरं दृष्ट्वा आजिघर्मि क्षरामि शोकेनाश्रूणि निवर्तयामि। अतो मित्रं हनुमत्पितुर्वायोः सखायं प्रतिष्ठं प्रथमानम् अग्निं शर्मं हनूमतेः कल्याणम् उपयामि उपेत्य याचामि। .... शिशानो दीप्यमानोऽग्निः क्रतुभिः यज्ञैः पूर्वम् अस्माभिः समिद्धः संदीपितः स इदानीं नोऽस्मत्सम्बन्धिनं जनं दिवा नक्तं च सरिषः हिंसातः पातु।' महामति नीलकण्ठ (मन्त्ररामायण-१०४)**

पवनपुत्र हनुमानजीको पुच्छरमा राक्षसहरूले अग्नि प्रज्वलित गरेपछि भगवती माता सीताले वायु (हनुमानजीका पिता) का मित्र

अग्निदेवसँग हनुमानजीको रक्षाका लागि प्रार्थना गर्दै भन्नुभयो – यस प्रकार अक्षयकुमार आदि राक्षसहरूलाई नाश गर्ने परमवेगवाला श्रीरामका दूत हनुमानजीलाई त्यस दशामा देखेर म सीता शोकले आँशु बगाइरहेकी छु । त्यसैले अग्निदेव जो आञ्जनेयका पिता पवनदेवका मित्र परमपवित्र र प्रतिष्ठित देवता हुनुहुन्छ । उहाँसँग वत्स हनुमानको कल्याणको लागि याचना गर्दछु । पहिले (जब म रामका साथ थिएँ तब) गरिएका यज्ञद्वारा देदीप्यमान किंवा संदीपित उनै अग्निदेव अहिले हाम्रा सम्बन्धित प्रियजन किंवा वात्सल्यभाजन हनुमानजीलाई सदैव दिनरात हिंसारत सबै प्रकारका ताप किंवा कष्टबाट रक्षा गर्नुहोस् ।

**कतूयन्ति कतवो हृत्सु धीतयो वेनन्ति वेनाः पतयन्त्या दिशः ।**
**न मर्डिता विद्यते अन्य  एभ्यो देवेषु मे अधि कामा अयंसत ॥**
**ऋग्वेद १०।८७१**

**'कतूयन्ति क्रतवः यज्ञाः कियामात्मान इच्छन्ति अस्मत्सेवां कर्तुमिच्छन्ति । हृत्सु धीतयः हृदयेषु धीमन्त वेनन्ति शोभन्ते । वेनाः कमनीयाः आसमन्ताद् दिशः पतयन्ति गच्छन्ति । एभ्यो वानररूपेभ्यो देवेभ्योऽन्यो न मर्डिता  सुखयिता न विद्यते । मे मम कामाः मनोरथाः देवेषु एषु असंयत अपूर्यन्त ।' (मन्त्ररामायण-६८)**

वानररूपमा अवतरित देवताहरूद्वारा गरिएको आफ्नो सेवाप्रति प्रभु श्रीरामले कृतज्ञता प्रकट गर्दा हनुमानजीको कीर्तिमाथि पूर्ण प्रकाश पार्नुभएको छ । वानरका रूपमा अवतरित सत्यसङ्कल्प देवता मेरो सेवा गर्ने इच्छा गर्दछन् । यी हृदयले सरस र सुन्दर छन् । अनन्य भक्तको रूपमा शोभित छन् । यी जनकनन्दिनी सीताको खोजमा चारैतिर सबै दिशाहरूमा जान्छन् । यी वानररूप देवताहरूभन्दा बढी मेरो लागि सुख दिने अरु कोही छैनन् । मेरो मनोरथ यिनै वानररूप देवताहरूद्वारा सदा पूर्ण भएका छन् ।

**..सूर्यचन्द्रमसौ धाता यथापूर्वमकल्पयत्..।**
**ऋग्वेद १०।१९०।१।**
**... तस्मिन्  अपोमातरिश्वा  दधाति ।**
**शुक्लयजुर्वेद ४०।४ ईशावाश्योनिषद् ४**

स्रष्टा रूपमा पूर्ववत् सृष्टि गर्नेवाला वृषाकपि हुन् । मूल तत्त्वको समुद्रबाट विन्दु रूपहरू (ब्रह्माण्ड तारा ग्रह सबै विन्दु हुन्)

मा वर्षा गर्दछ त्यो वृषा हो । पूर्ववत् गर्नेवाला अतः कपि हुन् । यस प्रकार सृष्टि कर्ता ब्रह्मा नै वृषाकपि हनुमान हुन् । शून्यमा व्याप्त इन्द्र तेजका कारण मरुत्रूप गति हुन् । तसर्थ इन्द्रलाई मरुत्वान् भनिएको हो । अप् (जल) मा विभिन्न पदार्थहरूको मिश्रण यही मरुत्बाट हुन्छ । यसबाट निर्माण या उत्पत्ति भएका कारण वेदोपनिषद्मा यसलाई ' मातरिश्वा' भनिएको छ ।

**अधरा हनुः पूर्वरूपम् । उत्तरा हनुरुत्तररूपम् ।**
**वाक्  सन्धिः । जिह्वा सन्धानमित्यध्यात्मम् ।**
**तै.उ. शि.व. ४।३**

आध्यात्मिक अर्थमा दुईवटा हनुको बीचको भाग ज्ञान र कर्म किंवा दश इन्द्रियको मिलन विन्दु हो । यी दश इन्द्रियलाई उभयात्मक मनद्वारा समन्वय गर्न सक्ने पुरुष हनुमान हुन् ।  यसबारे उपनिषद्मा भनिएको छ । अधरा (तल्लो) हनु (चिम्बुक) पूर्व रूप हो । उत्तरा (माथिल्लो) हनु (चिम्बुक) उत्तर रूप हो ।  वाणी सन्धि रूप हो । जिह्वा यसमा संयोजक हो । यो आत्मा सम्बन्धी संहिता हो ।

**ओमिति ब्रह्मा भवति, नकारो विष्णुर्भवति,**
**मकारो रुद्रो भवति...। तारसारोपनिषद् १।५**
**मकाराक्षरसम्भूतः शिवस्तु हनुमान् स्मृतः ।**
**तारसारोपनिषद् २।३**

तारकब्रह्मको स्वरूप स्पष्ट्याउने क्रममा याज्ञवल्क्य भन्नुहुन्छ – 'ॐ नारायण नमः' यस मन्त्रमा 'ॐकार' ब्रह्मा, 'न'कार विष्णु र 'म'कार रुद्र हुन् । 'ॐ' बीजको 'अ-उ-म' क्रमशः ब्रह्मा-विष्णु-शिव वा हनुमान हुन् । श्रीरामको दास्यभक्तिका लागि नै 'म' कारस्वरूप परब्रह्म शिव नै हनुमानजीका रूपमा प्रकट हुनुभएको हो । हनुमानजी साक्षात् रुद्ररूप हुनुहुन्छ । मकार शिवको वाचक हो भने मकाराक्षर शिव नै हनुमानको वाचक हो । अतः ॐकारमा रहेको मकार शिव । हनुमानको नै स्वरूप हो ।

**यो ह वै श्रीपरमात्मा नारायणः स श्रीभगवान् मकारवाच्यः**
**शिवस्वरूपो हनुमान् भूर्भुवस्वस्तस्मै वै  नमो नमः ।**
**तारसारोपनिषद् ३।३**

याज्ञवल्क्यले भारद्वाजलाई परमात्मवाचक ज्ञानको बोध गराउने क्रममा हनुमानजीलाई नारायणरूपमा वन्दना गर्दै नारायण, शिव र हनुमानजीको अभिन्नतालाई उद्घाटन गर्नुभएको छ। जो सुप्रसिद्ध परमात्मा नारायण हुनुहुन्छ उहाँ नै भगवान् हुनुहुन्छ। जो 'म'कारवाच्य शिवस्वरूप हनुमान र भूर्भुव आदि तीन लोक छन् ती पनि नारायणकै स्वरूप हुन्। यस्ता शिव (रुद्र) स्वरूप हनुमानलाई बारबार नमस्कार छ भनी हनुमानजीलाई एकादश रुद्र र भू आदि तीनै लोकका रूपमा निरूपण गर्नुभएको छ।

**यो ह वै रामचन्द्रः स भगवान् .. ..ये चैकादश**
**रुद्रा ... ...भूर्भुवस्वः तस्मै वै नमो नमः।**
**रामोत्तरतापिन्युपनिषद् ३३**

प्रजापिता ब्रह्माले श्रीहनुमानजीलाई परब्रह्म शिवरूपमा वन्दना गर्दै श्रीरामजी र श्रीरुद्रको अभिन्नतालाई देखाउनुभएको छ। जो सुप्रसिद्ध रामचन्द्र हुनुहुन्छ उहाँ नै भगवान् हुनुहुन्छ। जो एकादश रुद्र र भू आदि तीन लोक छन् ती पनि उहाँकै स्वरूप हुन्। यस्ता भगवान् श्रीरामलाई बारबार नमस्कार छ। यसरी ब्रह्माजीद्वारा श्रुतिमा श्रीहनुमानजीलाई एकादश रुद्रमध्ये एघारौं रुद्र र भू आदि तीनै लोकका रूपमा प्रकाशित गरिएको छ।

**अग्नीषोमौ पक्षौ, ओङ्कारः शिरो विन्दुस्तु नेत्रं मुखं रुद्रो**
**रुद्राणी चरणौ बाहू कालश्चाग्निश्चोभयपार्श्वे भवतः।**
**हंसोपनिषद् १४**

मस्तिष्कको माथि सहस्राधारबाट केही पछाडि जहाँ टुप्पी राखिन्छ त्यही विन्दु चक्र हनुमानजीको स्थान हो जहाँबाट अमृत स्राव हुन्छ। अग्नि र सोम त्यस (हंस) को पक्ष (पंख) हुन् , ओंकार शिर हो, विन्दुसहित उकार (हंस) को तृतीय नेत्र हो, मुख रुद्र/हनुमान हो। त्यसैले परब्रह्म रुद्ररूप हनुमानजी ॐकारस्वरूप परमात्मा रुद्रावतार परमगुरु र पूर्ण ब्रह्म पनि हुनुहुन्छ ।

**भो योगीन्द्राश्चैव ऋषयो विष्णुभक्तास्तथैव च।**
**श्रुणुध्वं मामकीं वाचं भवबन्धविनाशिनीम्॥**

**एतेषु चैव सर्वेषु तत्त्वं च ब्रह्म तारकम् ।**
**राम एव परं ब्रह्म तत्त्वं श्रीरामो ब्रह्मतारकम् ॥**
**रामरहस्योपनिषद् १।५-६**

जब सनक आदि ऋषिहरूले श्रद्धापूर्वक आफ्ना आचार्य व्याकरण, ज्योतिष आदि वेद-वेदाङ्गका अप्रतिम विद्वान् ज्ञानशिरोमणि सर्वज्ञ परमगुरु महावीर हनुमानजीसँग वेद, पुराण आदिको सारतत्त्व बताउन विन्ती गर्नुभयो तब उहाँले सनक आदि वैष्णवहरूलाई प्रेमपूर्वक तत्त्वसार बताउँदै भन्नुभएको छ – हे योगीन्द्र, त्रिकालद्रष्टा ऋषिहरू तथा विष्णुभक्त वैष्णवगण तपाईंहरू संसारको बन्धनलाई नष्ट गर्नेवाला मेरो कुरा सुन्नुहोस् । वस्तुतः सबै तत्त्वहरूमा तारक ब्रह्म नै सारतत्त्व हो । म तपाईंहरूसँग अत्यन्त रहस्यमय बात बताउँछु । श्रीराम नै परब्रह्म, श्रीराम नै सर्वोपरि तप, श्रीराम नै परम तत्त्व तथा श्रीराम नै तारक ब्रह्म हुनुहुन्छ ।

**सीतापते श्रीरघुनाथ लक्ष्मण ज्येष्ठ प्रभो श्रीहनुमत्प्रियेश्वर ।**
**इत्यादिकं कीर्तय वेदशास्त्रतः ख्यातं स्मरंस्तद्गुणरूपवैभवम् ॥**

**'बृहद्भागवतामृत'** मा नारदजीले गोपकुमारहरूलाई वेदशास्त्र-वर्णित हनुमत्प्रियेश्वर सीतापति मर्यादा पुरुषोत्तम श्रीरामको गुणवैभवको स्मरणपूर्वक कीर्तन गर्नुपर्दछ भनी उपदेश दिनुभएको छ । रुद्रावतार हनुमानजीको स्वरूप दिव्य किंवा चिन्मय छ । उहाँको रूप, गुण र पुण्यचरित्र यद्यपि वेदशास्त्रमा वर्णन गरिएको छ तथापि विज्ञानस्वरूप भएकाले उहाँ अरूप किंवा अप्रत्यक्ष हुनुहुन्छ । उल्लिखित सूक्ति वा मन्त्रका आधारमा वेदोपनिषद्ले परोक्षरूपमा हनुमानजीलाई साक्षात् ब्रह्मको रूपमा प्रतिपादन गरेको पुष्टि हुन्छ ।

अन्तमा ब्रह्माविष्णु-शिवात्मक ॐकारका प्रतीक, परमात्मास्वरूप, श्रीराम-हृदयानन्द, सर्वविद्या-विशारद, वेदवेदान्तवेद्य, आबाल-ब्रह्मचारी, महापराक्रमशाली, भक्तकल्पतरु, मङ्गलमूर्ति, मारुतिनन्दन, महावीर श्रीहनु-मानजीलाई **'अञ्जनीगर्भसम्भूत कपीन्द्रसचिवोत्तम, रामप्रिय नमस्तुभ्यं हनूमन् रक्ष सर्वदा ।'** का साथ सभक्ति वन्दना गर्दै विदा हुन्छु ।

***

# श्रीहनुमत्स्तुति र यसको महत्त्व

## १. विषयप्रवेश

मर्यादा पुरुषोत्तम भगवान् श्रीराम अनि हनुमानजीका भक्त गोस्वामी तुलसीदासजीले शत्रुनिवारण, रोग-व्याधिनिवृत्ति, अनिष्टनिवारण, सङ्कटमोचन, बन्धनमुक्ति तथा भगवद्भक्ति किंवा स्वान्तसुख प्राप्तिहेतु विभिन्न परिस्थिति र सन्दर्भमा विविध स्तुतिपरक रचनाहरू गर्नुभएको छ । जसमध्ये यस 'स्तुतिसंग्रह'मा सङ्कलित हनुमानचालीसा, वजरंगवाण, हनुमानबाहुक आदि कृतिहरूमा उहाँले प्रभु श्रीरामका अनन्य सेवक महावीर श्रीहनुमानजीको अनुपम शक्ति, परमभक्ति, रहस्यमय पुरुषार्थ तथा महत्ताका बारेमा विशेष चर्चा एवं वर्णनसहित प्रार्थना गर्नुभएको छ ।

प्रभु श्रीरामका परमभक्त महावीर श्रीहनुमानजी जसको हृदयमा भगवान् श्रीराम तथा जगन्माता सीता सदैव विराजमान हुनुहुन्छ , जसको व्यक्तित्व विशाल, भव्य र महिमामण्डित छ , जो अष्टसिद्धि र नवनिधिका दाता हुनुहुन्छ , जसलाई सुनेर देखेर रावण, शनि, यम आदि पनि त्रासले भयभित हुन्छन् किंवा भयले काँप्छन् । यस्ता महावीर हनुमानजीको चरित्रमा केन्द्रित उल्लिखित रचनाहरूमा श्रीरामदूत हनुमानजीको क्षमता, बुद्धि, ज्ञान, गुण, बल, पराक्रम, शौर्य, शक्ति र सामर्थ्यको अति सुन्दर वर्णन छ। साथै हनुमानजीद्वारा गरिएका भगवान् श्रीरामको सेवासम्बन्धी महत्त्वपूर्ण कार्य, उहाँको भक्ति र प्रशंसाको अनुपम चित्रण छ ।

## २. श्रीहनुमत्स्तुति

सन्तकवि श्रीतुलसीदासजीकृत रामायणादिमा प्रस्तुत 'श्रीहनुमत्स्तुति' श्रीहनुमानजीको स्तुतिपरक महत्त्वपूर्ण फुटकर रचना हो । यसमा सातवटा संस्कृत श्लोकहरू सङ्कलित छन् जसमा मालिनी, अनुष्टुप, उपजाति, रथोध्दता छन्दको प्रयोग गरिएको छ। हनुमानजीको चरित्रकेन्द्रित उल्लिखित पद्यहरूमा सकलगुणनिधान, आबालब्रह्मचारी अञ्जनीनन्दन, हनुमानजीको श्रीरामभक्ति, वीरता, धीरता, शूरता, बौद्धिकता, कमनीयता, क्षमता र अनन्त गुणगरिमाको सुन्दर चित्रण छ। यसको नियमित पाठ गर्नाले श्रीहनुमानजी शीघ्र प्रसन्न हुनुहुन्छ र उहाँको कृपा किंवा आशीर्वाद प्राप्त हुन्छ ।

## ३. श्रीहनुमानचालीसा

सन्तकवि तुलसीदासजीद्वारा रचित हनुमानचालीसा भगवान् श्रीराम र हनुमानजीको चरित्रपरक महत्त्वपूर्ण स्तोत्ररचना हो । १६ औँ शताब्दीमा रचित यस स्तुतिपरक रचनामा तीनवटा दोहा र चालीसवटा चौंपाईं गरी जम्मा त्रिचालीसवटा पद्य रहेका छन् । भनिन्छ - तुलसीदासजीले हनुमानजीलाई चिनेपछि सर्वप्रथम हनुमान चालीसाको पाठ सुनाउनु भएको थियो । उहाँले यसको रचना रामभक्ति, हनुमानजीको वीरता प्रदर्शन र भक्तहरूको कल्याण हेतु गर्नुभएको हो ।

श्रीहनुमान-चालीसाको रचना तथा सिद्धता आदिका विषयमा लोकपरम्परामा केही जनश्रुति प्रचलित छन् । एकदिन अकबरले सन्तकवि तुलसीदासजीको कवित्वको चर्चा सुनेर उहाँलाई दरबारमा बोलाई आफ्नो प्रशंसा गरी कविता लेख्न निर्देशन दिएछन् तर सन्तकवि तुलसीदासजीले श्रीरामबाहेक अरु कसैको प्रशंसा गरेर कविता लेख्दिन भनी सिधा जवाफ दिनुभएछ । फलतः अकबर रिसाएर उहाँलाई कारागारमा थुनिदिएछन् । कारागारमै बसेर उहाँले हनुमान चालीसाको सुन्दर रचना गरी चालीस दिनसम्म अविच्छिन्न पाठ गर्नुभएछ । जसको प्रभावले अचानक सयौं बाँदरहरू दरबार परिसरमा प्रकट भई चारैतिरबाट घेरेर सेनामाथि आक्रमण गर्न थालेछन् । सेनाहरूमा हाहाकार मच्चिएपछि अकबरले बाध्य भएर गोस्वामी तुलसीदासजीलाई कारागारबाट मुक्त गरेछन् ।

तसर्थ हनुमानचालीसा अनुभवसिद्ध एक सिद्ध स्तोत्ररचना मानिन्छ । यसको आफ्नै महत्त्व, गरिमा र विशेषता छ । त्यसैले सनातन हिन्दु धर्ममा आस्था राख्ने श्रद्धालुहरूले हनुमानजी र हनुमान चालीसाप्रति अगाध निष्ठा, श्रद्धा, भक्ति र भरोसा राख्दछन् । यसको विधिपूर्वक पाठ गर्नाले व्यक्तिका दुर्भाग्यजनित दरिद्रता, असाध्य रोग, शोक, क्लेश तथा विपत्तिहरू निवारण हुन्छन् । हनुमानजीले भूत, प्रेत, पिशाच आदि दुरात्मा शत्रुहरूबाट साधकको सदैव रक्षा गर्नुहुन्छ । विजय, यश, मान, सिद्धि एवं शक्ति प्रदान गर्नुहुन्छ अनि आफ्ना प्रिय भक्तहरूको मनोकामना पूरा गर्नुहुन्छ ।

## ४. श्रीसङ्कटमोचन-हनुमानाष्टक

गोस्वामी तुलसीदासजीद्वारा रचित श्रीसङ्कटमोचन-

हनुमानाष्टक भगवान् श्रीरामका परमभक्त हनुमानजीको चरित्रपरक महत्त्वपूर्ण स्तोत्ररचना हो । १६ औँ शताब्दीमा रचित यस स्तोत्रमा अष्टपदीय मत्तगयन्द छन्दका आठवटा र एउटा दोहासमेत गरी जम्मा नौवटा पद्य रहेका छन् । यसमा केसरीनन्दन हनुमानजीले गर्नुभएका भगवान् श्रीरामचन्द्रको अनन्य सेवा र लोककल्याणपरक सत्कार्यहरूको सूत्रात्मक चित्रण छ । उहाँका दिव्यगुण, शक्ति, वीरता र श्रीरामभक्तिको उद्बोधन छ ।

सन्तकवि गोस्वामी तुलसीदासजीले विशेषतः अञ्जनीनन्दन हनुमानजीका दिव्य गुण, बल, पराक्रम, शक्ति, भगवन्निष्ठा र वीरतापूर्ण सत्कार्यको स्मरण गर्दै भगवत्कृपा प्राप्ति तथा भक्तभागवतको सङ्कटमोचन हेतु यस स्तोत्रको रचना गर्नुभएको हो । यसको जपपाठ अत्यन्त प्रभावशाली एवं सिद्धिदायक मानिन्छ । जसले श्रद्धा, भक्ति एवं विधिपूर्वक हनुमानाष्टकको पाठ गर्छ, सुन्छ वा सुनाउँदछ । ऊसँग केसरीनन्दन महावीर हनुमानजी शीघ्रातिशीघ्र प्रसन्न हुनुहुन्छ । सुख, शान्ति र समृद्धि प्रदान गर्नुहुन्छ । आफ्ना भक्तहरूलाई स्वयं हरप्रकारका सङ्कटबाट मुक्त गराई रक्षा गर्नुहुन्छ अनि मनोबाञ्छित फलसमेत प्रदान गर्नुहुन्छ ।

## ५. श्रीबजरंगबाण

गोस्वामी तुलसीदासद्वारा १६ औँ शताब्दीमा रचित बजरंगबाण रुद्रावतार हनुमानजीको चरित्रपरक स्तोत्ररचना हो । यस रचनामा दुईवटा दोहा र बत्तीसवटा चौपाईं गरी जम्मा चौंतीसवटा पद्य रहेका छन् । बजरंगबाण अनुभवसिद्ध स्तुतिवन्दना हो । यसको पाठ सुखमय वैवाहिक जीवन र ग्रहदोष शान्ति एवं रोग, शत्रुभय, वास्तुदोष आदि बाधा निवारण हेतु विशेष फलदायी मानिन्छ । बजरंगबाणका सम्बन्धमा पनि किंवदन्ती प्रचलित छ । पितृदोष, ग्रहदोष, प्रेतबाधाजस्ता सूक्ष्म तामसी शक्तिद्वारा तुलसीदासजी पीडित हुनुभएको थियो । त्यही अवस्थामा उहाँले आत्मरक्षा र लोककल्याण हेतु यस स्तोत्रको रचना गर्नुभएको हो ।

भनिन्छ – काशीको कुनै तान्त्रिकले मारण मन्त्रको प्रयोग गरी तुलसीदासजीलाई कष्ट पुऱ्याएका थिए । शरीरभरि ब्रण (घाउ) निस्केर उहाँ असह्य वेदनाले पीडित हुनुहुन्थ्यो । उहाँले शरणागतभावले हनुमानजीको पुकार गर्दै बजरंगबाणको रचना गरी श्रद्धापूर्वक पाठ गर्नुभयो । श्रीहनुमानजीको कृपाले ब्रणपीडा र शत्रुभयबाट उहाँ पूर्णतः

मुक्त हुनुभयो । अतः निष्ठापूर्वक यसको पाठ गर्नाले साधकलाई भौतिक एवं आद्यात्मिक दुबै लाभ मिल्छ । जसले हनुमानजीमा अटुट प्रेम राख्दछ, नित्य ध्यान गर्दछ र श्रद्धा एवं भक्तिले विधिपूर्वक बजरंगबाणको जपपूजापाठ गर्दछ उसले महावीर हनुमानजीको कृपाले गम्भीररोग, विवाहबाधा, ग्रह-वास्तुदोष र शत्रुनिवारण हुन्छ अनि साधकका मनोवाञ्छित कार्यहरू सिद्ध हुन्छन् ।

## ६. श्रीहनुमानबाहुक

सन्तकवि गोस्वामी तुलसीदासद्वारा १६ औँ शताब्दीमा रचित हनुमानबाहुक रुद्रावतार हनुमानजीको दिव्य चरित्र वर्णन, वातव्याधिजनित असह्य पीड़ाको अभिव्यक्तिसहित हनुमत्पुकार गरिएको हनुमानजीको चरित्रपरक स्तोत्ररचना हो । यस रचनामा झुलना एउटा, छप्पय दुईवटा, सवैया पाँचवटा र छत्तीसवटा घनाक्षरी गरी जम्मा चवालीसवटा पद्यरचना रहेका छन् । हनुमानबाहुक अनुभवसिद्ध स्तुतिवन्दना हो ।

लगभग १६६४ विक्रमाब्दतिरको घटना हो । त्रिदोष-व्याधिका कारण तुलसीदासजीका दुबै हातका अतिरिक्त सम्पूर्ण शरीरमा गहिरो पीड़ा व्याप्त थियो । शरीरभरि भयङ्कर फोका/बिबिरा उत्पन्न भएकाले मानौं देहका प्रत्येक अङ्गमा वेदना बाहेक अरूको कुनै स्थान थिएन । रातदिन असह्य पीड़ाले सताइरहेको थियो । पीडा सहन नसकेर उहाँ पागलजस्तै हुनु भएको थियो । तुलसीदासजीले हनुमानबाहुक नामक उक्त स्तोत्रमा मनको पीडा यसरी पोख्नुभएको छ - यो वातव्याधिजनित असह्य पीड़ा मेरो भाग्यमा लेखेको हो या समय, क्रोध वा त्रिदोषको हो या मेरै भयङ्कर पापको परिणाम हो या यन्त्र-मन्त्ररूपी वृक्षको फल हो ।

औषधि, यन्त्र, मन्त्र आदि अनेक उपाय गर्दा पनि रोग दिनानुदिन बढ्दै गएकाले असहनीय पीडाले तुलसीदासजी हताश हुनुभयो । अन्तमा उक्त रोगबाट निवृत्त हुनका लागि हनुमानजीको वन्दना आरम्भ गर्नुभयो । हनुमानजीका कृपाले सारा रोगपीडाहरू नष्ट भए । अतः यसको पाठ ग्रहदोष, असाध्यरोग, शत्रुभयादि बाधानिवारण र अवरुद्ध कार्यसिद्धिहेतु विशेष मानिन्छ । तुलसीदासजीले गरेको यही वन्दना नै 'हनुमानबाहुक' नामक सिद्ध-प्रसिद्ध स्तोत्र हो । हनुमानजीका अङ्सख्य उपासक निरन्तर यसको पाठ गर्दछन् र आफ्नो मनोवाञ्छित सफलता प्राप्त गरेर प्रसन्न हुन्छन् ।

## ७. श्रीहनुमानसाठिका

सन्तकविद्वारा १६ औँ शताब्दीमा रचित हनुमानसाठिका पवनकुमार हनुमानजीको दिव्य चरित्र वर्णन, वातव्याधि जनित असह्य पीड़ाको अभिव्यक्ति र हनुमानजीको पुकार गरिएको हनुमच्चरित्रपरक स्तोत्ररचना हो । यस रचनामा एउटा सवैया, चारवटा दोहा र साठीवटा चौंपाइँ गरी जम्मा पैंसठ्ठीवटा पद्य रहेका छन् । यो चमत्कारी र मनलाई शान्ति दिनेवाला स्तोत्र हो । यसको पाठ रोगव्याधीनाश, शत्रुनिवारण र सफलताप्राप्ति हेतु विशेष महत्त्वपूर्ण मानिन्छ ।

हनुमान साठिकाको नियमित पाठ गर्नाले सबै प्रकारका दुःख, कष्ट र रोगहरू दूर हुन्छन् । तपाईं हामीमाथि हनुमानजीको सदैव कृपा बनिरहन्छ । हनुमानजीले हरेक सङ्कटबाट भक्तको रक्षा गर्नुहुन्छ । तपाईं हाम्रा मनोकामनाहरू पूरा हुन्छन् ।  यदि सच्चा मनले यसको पाठ गर्‍यौं भने राम्रो परिणाम प्राप्त हुन्छ । घरमा खराब प्रभाव र मनमा नकारात्मक विचार आउँन पाउँदैन । मनमा शान्ति मिल्दछ ।

## ८. निष्कर्ष

हनुमत्स्तोत्रहरूको पाठ हनुमानजीको प्रियदिन किंवा मंगलवार या शनिबारबाट शुरू गर्नु बढी फलदायी हुन्छ । साधकले बिहान सबेरै उठी नित्य क्रिया सकेर विधिपूर्वक पाठारम्भ गर्नुपर्दछ । हनुमानजीको मन्दिरमा पाठ गर्दा अधिक फलदायी हुन्छ । अन्यत्र हनुमानजीको तस्वीर या मूर्तिलाई अगाडि राखेर संक्षिप्त पूजा गरी पाठारम्भ गर्न सकिन्छ । किन्तु हनुमानजीमा पूर्ण श्रद्धा र विश्वास राखी जपपाठ गर्नुपर्दछ । जपपाठ गर्ने बेलामा मनमा लोभ, मोह, मद, मात्सर्य आदि नकारात्मक विचार आउन दिनुहुँदैन ।

श्रीहनुमानजीका भक्त साधकले श्रीहनुमत्परक मन्त्र, तन्त्र किंवा स्तोत्रहरूको आ-आफ्नो अभिरुचि, आवश्यकता र सङ्कल्प अनुसार पूर्णश्रद्धा र भक्तिपूर्वक हनुमानजीको ध्यान, पूजा-अर्चना गरी जप, पाठ आदि गर्दछन् । तिनले हनुमानजीको कृपा र आशीर्वादलेले मनोवाञ्छित फलप्राप्त गर्छन् अनि सबै प्रकारका दुःखकष्ट, रोगव्याधि र सङ्कटबाट मुक्त हुन्छन् ।

***

# परिशिष्ट

## १. अतिसङ्क्षिप्त श्रीहनुमत्पूजाविधि

**क) पवित्रीकरण ख) सङ्कल्प ग) दीपपूजन घ) श्रीगणेशपूजन**
**ङ) कलशपूजन च) श्रीसीतारामध्यान छ) श्रीहनुमद्ध्यान**
**ज) श्रीहनुमत्पूजन झ) श्रीहनुमत्स्तवन ञ) क्षमायाचना आदि**

**ॐ अपवित्रः पवित्रो वा सर्वावस्थां गतोऽपिवा ।**
**यः स्मरेत्पुण्डरीकाक्षं स बाह्यभ्यन्तरः शुचिः ॥**

ॐ पुण्डरीकाक्षः पुनातु । ॐ पुण्डरीकाक्षः पुनातु ।
ॐ श्रीहनुमते नमः ध्यानार्थे पुष्पाणि सर्मपयामि ।
ॐ श्रीहनुमते नमः आवाहनार्थे पुष्पाणि समर्पयामि ।
ॐ श्रीहनुमते नमः आसनार्थे पुष्पाणि समर्पयामि ।
ॐ श्रीहनुमते नमः पादयोः पाद्यं समर्पयामि ।
ॐ श्रीहनुमते नमः हस्तयोरर्ध्यं समर्पयामि ।
ॐ श्रीहनुमते नमः मुखे आचमनीयं जलं समर्पयामि ।
ॐ श्रीहनुमते नमः स्नानीयं जलं समर्पयामि ।
ॐ श्रीहनुमते नमः पञ्चामृतस्नानं समर्पयामि ।
ॐ श्रीहनुमते नमः शुद्धोदकस्नानं समर्पयामि ।
ॐ श्रीहनुमते नमः उद्वर्तनं (सिन्दूरं) समर्पयामि ।
ॐ श्रीहनुमते नमः वस्त्रं समर्पयामि ।
ॐ श्रीहनुमते नमः यज्ञोपवीतं समर्पयामि ।
ॐ श्रीहनुमते नमः चन्दनं समर्पयामि ।
ॐ श्रीहनुमते नमः अक्षतान् समर्पयामि ।
ॐ श्रीहनुमते नमः पुष्पमालां समर्पयामि ।
ॐ श्रीहनुमते नमः आभूषणं समर्पयामि ।
ॐ श्रीहनुमते नमः धूपमाघ्रापयामि ।
ॐ श्रीहनुमते नमः दीपं दर्शयामि ।
ॐ श्रीहनुमते नमः नैवेद्यं निवेदयामि ।
ॐ श्रीहनुमते नमः नैवेद्यान्ते जलं समर्पयामि ।

ॐ श्रीहनुमते नमः ऋतुफलं समर्पयामि ।
ॐ श्रीहनुमते नमः दक्षिणां समर्पयामि ।
ॐ श्रीहनुमते नमः आरार्तिक्यं समर्पयामि ।
ॐ श्रीहनुमते नमः प्रदक्षिणां समर्पयामि ।
ॐ श्रीहनुमते नमः मन्त्रपुष्पाञ्जलिं समर्पयामि ।
ॐ श्रीहनुमते नमः नमस्कारान् समर्पयामि ।
ॐ श्रीहनुमते नमः क्षमायाचनां समर्पयामि ।

**२. हनुमत्पूजा-साधनामा विशेष ध्यान दिनुपर्ने विषयहरू :**

१) हनुमत्साधनामा पूजा-पाठ-जप गर्दा शुद्ध-पवित्र रहने ।
२) साधकले साधनाकालमा ब्रह्मचर्यको पूर्ण पालन गर्ने ।
३) नैवेद्य/प्रसाद आदि बनाउँदा शुद्धघिउको प्रयोग गर्ने ।
४) गाईको घिउ/चमेलीतेल मिलाई सिन्दुर लेपन गर्ने ।
५) केसर आदि मिसाएर घोटेको रातो चन्दन चढाउने ।
६) पुरुषवाची राता-पहेंला लामा-ठूला फूल अर्पण गर्ने ।
७) गुड़, लड्डु , रोटी, आँप, केरा आदि नैवेद्य अर्पण गर्ने ।
८) सात्विक जप-पाठमा रुद्राक्ष/तुलसीमाला प्रयोग गर्ने ।
९) मनमा मात्सर्यादि नकारात्मक विचार आउन नदिने ।
१०) हनुमानजीलाई अर्पित नैवेद्य प्रसादरूपमा ग्रहण गर्ने ।

## श्रीहनुमत्-द्वादश-नामानि

**हनुमानञ्जनीसूनुर्वायुपुत्रो महाबलः ।**
**रामेष्टः फाल्गुनसखः पिङ्गाक्षोऽमितविक्रमः ॥**
**उदधिक्रमणश्चैव सीताशोकविनाशनः ।**
**लक्ष्मणप्राणदाता च दशग्रीवस्य दर्पहा ॥**
**एवं द्वादश नामानि कपीन्द्रस्य महात्मनः ।**
**स्वापकाले प्रबोधे च यात्राकाले च यःपठेत् ॥**
**तस्य सर्वभयं नास्ति रणे च विजयी भवेत् ।**
**राजद्वारे गह्वरे च भयं नास्ति कदाचन ॥**
**आनन्दरामायण ८।१३।८-११**

***

**३. हनुमानचालीसाका सिद्धिप्रद केही दोहा/चौपाइ (मन्त्र) हरू :**

१) क्लेश/पीडानाश र बल, बुद्धि, विद्याप्राप्ति :

**बुद्धिहीन तनु जानिके , सुमिरौं पवन-कुमार ।**
**बल, बुधि, बिद्या देहु मोहिं, हरहु कलेश विकार ॥**

२) विद्या, ज्ञान, विवेक, धन र चतुरताप्राप्ति :

**बिद्याबान गुनी अति चातुर, रामकाज करिबे को आतुर ।**

३) शत्रुनाश तथा श्री, समृद्धि र सफलताप्राप्ति :

**भीम रूप धरि असुर सँहारे, रामचंद्र के काज सँवारे ।**

४) जागिर/सेवा, पद र प्रतिष्ठाप्राप्ति :

**तुम उपकार सुग्रीवहिं कीन्हा, राम मिलाय राज पद दीन्हा ।**

५) दुर्गम तथा कठिन कार्यमा सफलताप्राप्ति :

**दुर्गम काज जगत के जेते, सुगम अनुग्रह तुम्हरे तेते ।**

६) विविध सुख एवं हनुमत्कृपाप्राप्ति :

**सब सुख लहै तुम्हारी सरना, तुम रच्छक काहू को डरना ।**

७) भय, खराबशक्ति र नकारात्मक ऊर्जादूरीकरण :

**भूत पिशाच निकट नहिं आवै, महाबीर जब नाम सुनावै ।**

८) रोगव्याधि-पीडानाश तथा शीघ्र कार्यसिद्धि :

**नासै रोग हरै सब पीरा, जपत निरंतर हनुमत बीरा ।**

९) धनधान्य, सिद्धि एवं शक्तिप्राप्ति :

**अष्ट-सिद्धि नवनिधि के दाता, अस बर दीन जानकी माता ।**

१०) पीर, बाधा र संकटनाश तथा समस्या-समाधान

**संकट कटै मिटै सब पीरा, जो सुमिरै हनुमत बलबीरा ।**

***

**दास्यभक्त श्रीहनुमान्‌जी**

**श्रीविष्णोः श्रवणे परीक्षिदभवद् वैयासकि : कीर्तने ।**
**प्रह्लादः स्मरणे तदङ्घ्रिभजने लक्ष्मीः पृथुः पूजने ॥**
**अक्रूरस्त्वभिवन्दने कपिपतिर्दास्येऽथ सख्येऽर्जुनः ।**
**सर्वस्वात्मनिवेदने बलिरभूत् कृष्णाप्तिरेषां परम् ॥**

## सन्दर्भ-ग्रन्थसूची


| क.सं. सन्दर्भ | ग्रन्थप्रकाशक | प्रकाशन मिति |
|---|---|---|
| १) अथर्ववेद | संस्कृत साहित्य प्रकाशन | २०१५ |
| २) ईशावाश्योपनिषद् | गीताप्रेस गोरखपुर | २०७३ |
| ३) ऋग्वेद | संस्कृत साहित्य प्रकाशन | २०१६ |
| ४) कल्याण श्रीहनुमान-अङ्क | गीताप्रेस गोरखपुर | १९७५ |
| ५) तारसारोपनिषद् | samskritdocoments.org | 2017 |
| ६) तैत्तिरीयोपनिषद् | गीताप्रेस गोरखपुर | २०७३ |
| ७) बजरंगबाण | गीताप्रेस गोरखपुर | १९७५ |
| ८) बाल्मीकि रामायण | गीताप्रेस गोरखपुर | २०७ |
| ९) महाभारत | गीताप्रेस गोरखपुर | २०५५ |
| १०) यजुर्वेद | संस्कृत साहित्य प्रकाशन | २०१५ |
| ११) रामचरित्रमानस | गीताप्रेस गोरखपुर | २०३२ |
| १२) रामोत्तरतापन्युपनिषद् | युग निर्माण योजना | २००५ |
| १३) रामरहस्योपनिषद् | samskritdocoments.org | 2016 |
| १४) श्रीमद्भागवत गीताप्रेस | गोरखपुर | २०५१ |
| १५) धर्मायण श्रीहनुमद्विशेषाङ्क १ | महावीर मन्दिर पटना | २०७८ |
| १६) सङ्कटमोचनहनुमानाष्टक | गीताप्रेस गोरखपुर | २०६० |
| १७) सामवेद | संस्कृत साहित्य प्रकाशन | २०१५ |
| १८) स्कन्धपुराण | गीताप्रेस गोरखपुर | २०७५ |
| १९) हंसोपनिषद् | युग निर्माण योजना | २००५ |
| २०) हनुमानचालीसा | गीताप्रेस गोरखपुर | २०६० |
| २१) हनुमानबाहुक | गीताप्रेस गोरखपुर | २०५८ |
| २२) हनुमानसाठिका | samskritdocoments.org | 2018 |


***

**रामं भजे श्यामलम्**

**वामे भूमिसुता पुरस्तु हनुमान् पृष्ठे सुमित्रासुतः ।**
**शत्रुघ्नो भरतश्च पार्श्वदलयोर्वाय्वादिकोणेषु च ॥**
**सुग्रीवश्च विभीषणश्च युवराट्तारासुतो जाम्बवान् ।**
**मध्ये नीलसरोजकोमलरुचिं रामं भजे श्यामलम् ॥**

**देहदृष्ट्या तु दासोऽहं जीवदृष्ट्या त्वदंशकः ।**
**वस्तुतस्तु त्वमेवाहमिति मे निश्चिता मतिः ॥**

***